गर्नुहुन्थ्यो। विद्यार्थीवर्गलाई राजनीतिबाट विद्यार्थी जीवनपर्यन्त टाढ़ै रहने उहाँको निर्देश थियो। यसरी उहाँको आदेश निर्देशको किञ्चित् उल्लङ्घन गर्न नसक्ने विद्यार्थीहरूमा राजनैतिक उद्दण्डता र उच्छृंखलताले स्पर्शसम्म गर्दैनथ्यो। परिस्थितिवश विस्थापित जस्ता भइदिनुभएको टीकाराम सर बसाइँ सरेर नेपालतर्फ लाग्नुभयो- सपरिवारै। नेपाल पसेर पनि उहाँको प्रतिभा र व्यक्तित्व देखेर त्यहाँको समाजले उहाँलाई यथोचित सम्मान र आदरसहित अपनायो; आत्मीयता प्रदान गऱ्यो। यहाँसम्म कि उहाँको समुचित मूल्य र महत्त्व बुझेर उहाँलाई राज परिषद्को सदस्य मनोनीत गरी उहाँको व्यक्तित्वलाई सम्मानित गऱ्यो। जुन आदर सत्कार उहाँलाई कालेबुङले दिनुपर्नेथ्यो, त्यो सत्कार र सम्मान नेपालले दिएर उहाँले गर्नुभएको त्याग र सेवाको सराहना शब्दले होइन, सम्मानले गरिदियो।

उहाँसँग अन्तिमपटक भेट भएथ्यो- कुमुदिनीको स्वर्ण जयन्ती समारोहको अवसरमा। गुरुमा पनि आउनभएथ्यो सँगै। कति पुलकित, हर्षाह्लादित र प्रफुल्लित भएका थियौं हामी सबै। अत्यन्तै कठिनतापूर्वक पाइएको दुइ चार मिनटमा उहाँहरूको भलाकुसारी सोध्यौं। हाम्रो पालोमा भव्यतापूर्वक मनाइने पाठशाला दिवस, मेला, लोक-गीत र सङ्गीतको रमाइलो कार्यक्रम, नाट्य मञ्चन आदिको संक्षिप्त चर्चा गऱ्यौं अनि कार्यक्रम अनुसार उहाँलाई प्रत्येक भूतपूर्व छात्रहरूले धर्महलको मञ्चमा भेटे, सानोतिनो सौगात टक्राए अनि आशीर्वचन प्राप्त गर्न गोड़ामै निधार राखेर ढोग्ने भू॰पू॰ विद्यार्थीहरूमा धेरजसो प्रौढ़ावस्थाका र जीवनका विभिन्न कर्म क्षेत्रमा यश, कीर्ति आर्जन गर्दै विभिन्न उच्च ओहोदामा पुगिसकेका व्यक्तित्वहरू थिए। त्यो दृश्य देख्दा लाग्थ्यो कि ***ऋषिकालीन गुरु-शिष्य परम्परा भारतभूमिमा आज पनि बाँचेकै छ।*** त्यस कार्यक्रमको लगत्तैपछि उहाँहरू काठमाडौं फिर्नुभयो र प्रायः धेरजसो विद्यार्थीहरूलाई उपलब्ध गराइएको ठुङ्गोमा सम्झना पत्र पनि लेख्नुभयो।

आज उहाँको पार्थिव शरीर पञ्चतत्त्वमा लीन भइसकेको छ। हामीसँग बाँचेका छन्- उहाँको प्राचार्यत्वमा हामीले पाएका शिक्षा र त्यससँग सम्बन्धित अनुशासन, तालीम र मानवमूल्य बुझ्नसक्ने क्षमताहरू।

संस्मरणको अन्त्यमा म मेरा ती सम्पूर्ण भूतपूर्व छात्रहरू (जसले उहाँको देखरेखमा शिक्षार्जन गरेका थिए)-प्रति सुझाउ राख्न चाहन्छु कि उहाँले दिनुभएको शिक्षा-दीक्षाको प्रतिदानस्वरूप, गुरु दक्षिणाको रूपमा, हामी सबै मिलेर कुमुदिनी विद्याश्रमको प्रांगणमा उहाँको एउटा सालिगको स्थापना गरिवरी उहाँकै पुत्र र मेरा सहपाठी श्री लीलाप्रसाद शर्माको कर-कमलबाट अनावरण गराउने जमर्को गर्न सकिएला कि!

अन्त्यमा, नेपाली समाजको दिवंगत विभूति स्व॰ टीकाराम सरको आत्माले शान्ति पाओस्-यही छ प्रार्थना ईश्वरप्रति।







# कुमुदिनी होम्स्लाई फर्केरहेर्दा...

■ बी॰ सी॰ सुब्बा
अवकाश प्राप्त उप-प्रधानाध्यपक

जाने दिनमा आएको दिनको सम्झना गर्न मन पर्‍यो। बितेका दिनहरू यसो फर्केर हेर्न मनपर्‍यो। टाढ़ैबाट देखिने कुमुदिनी होम्सको घड़ीको अग्लो टावरलाई हेर्दा यस्तो भान हुन्छ मानौं यसले सबैलाई शिर ठाड़ो राख्ने आह्वान गरिरहेछ। स्कूलको छेवैमा कुमुदिनी विद्याश्रम अङ्कित एउटा सुन्दर गेट छ जसमाथि मनोग्राममा स्कूलको आदर्श वाक्य **चरित्रं हि बलम्** अनि पोखरीमा कमलको फूल, पहाड़ र पर क्षितिजमा झुल्कँदै गरेको घामको एक अति मनोहर चित्र अंकित गरिएको छ। प्रधान अध्यापक टी॰ आर॰ शर्माको नेतृत्वमा कुमुदिनी होम्सका विल्डिङ्गहरूको निर्माण गर्नमा सेवाको रूपमा सहयोग दिनेहरू हुन् सर्वप्रथम स्व॰ बक्तवार सिंह रोका अनि अभियन्ताहरू स्व॰ रूद्रमणि प्रधान र एल॰ के॰ एहवाइ। स्व॰ रुद्रमणि प्रधान कालेबुङदेखि बाहिर जानुभएपछि सम्पूर्ण विल्डिङ्गहरूको निर्माणको देखरेख एल॰ के॰ अहोयले गरेका थिए। उहाँको भनाई अनुसार कुमुदिनीको गेट दिल्लीको इण्डिया गेटको अनुकरण गरेर बनाउनु भएको रे। मोनोग्राम चाहिँ उहाँका भाइ स्व॰ लाई इनाम एहवाइको कलाकृति हो। एल॰ के॰ एहवाइ पनि धेरै अघि अमेरिका जानुभयो।

तर उहाँहरूका कृतिहरू अझै यहाँ विद्यमान छन् अनिइ रहनेछन्। घड़ीको टावरको छाना चाहिँ एकराज शम्शेर ज॰ बा॰ राणाबाट आफ्ना स्वण पिताका नाउँमा धर्महल निर्माण गर्न दान प्रदान गर्नु भएकोमा तत्कालीन प्रधानाध्यापक टी॰ आर॰ शर्माको शब्दमा... भनेर उताको स्थापत्यकलाको एउटा नमूना चिनोको रूपमा ल्याएको। अति आधुनिक ढाँचामा निर्मित कुमुदिनी होम्सको तीनतल्ले विल्डिङ्ग हेर्दा साँच्चै नै प्रभावशाली देखिन्छ। ठूलो हल, रङ्गमञ्च ठूल्ठूला श्रेणी कमराहरू, विज्ञान विषयको निम्ति प्रयोगशाला, संग्रहालयको निम्ति बनाइएको एउटा ठूलो कमरा, पुस्तकालय र क्राफ्ट रूम इत्यादिले यो युक्त छ। यतिको ढङ्ग पारेर बनाइएको स्कूल विल्डिङ्ग बंगालमा शायद कम्ति नै होला। यो कालेबुङको ***शो पीस*** हो। यहाँका जनताको गौरव हो। यहाँ पढ्न पाउने छात्रहरूलाई अवश्य गर्व हुनपर्ने।

स्कूलको देब्रेतिर विशाल छात्रवास (अघि सिक्किम, भुटान र नेपालका छात्रहरूका लागि खुबै महत्त्वपूर्ण थियो) सामुमा अफिस विल्डिङ्ग अनि यसको दाहिने र देब्रेतिर क्रमैसँग प्री-वेसिक प्राइमेरी स्कूलहरू र अरू क्वाटरहरू छन्। यो कुमुदिनी कम्प्लेक्सले प्रायः दुइ-तीन ऐकर जमिन ढाकेको होला। यो कुमुदिनी होम्सको आफ्नै इतिहास छ। यसबाट हामीले, आउने पुस्ताहरूले अवश्य केही न केही शिक्षा लिनुपर्छ, प्रेरणा पाउनुपर्छ। स्व॰ मोतीचन्द्र प्रधान, प्रथम नेपाली एस॰ डी॰ ओ॰, अघि एकपल्ट यस स्कूलका सञ्चालक समितिका सभापति हुनु हुँदा उहाँको मुखारवृन्दबाट सुनेको यो स्कूलको शुरु एक रात्रि पाठशालाबाट भएको थियो। पछि डे स्कूल (दिवा पाठशाला) अनि क्रमशः बढ्दै १६४०मा टाउन एम॰ इ॰ स्कूलको नाउँले स्वीकृति प्राप्त भएको हो। सन् १६४७ मा







शिक्षकको रूपमा मेरो नियुक्ति हुँदा यो जुनियर हाइस्कूल भइसकेको थियो। हाट बजार माथि प्रणामी मन्दिर छेउमा बाँसको बारमा माटोले लिपेको एउटा दुइताल्ले घर थियो। यसैमा आठौं श्रेणीसम्मका छात्रहरू पढ्थे। स्व॰ जी॰ एस॰ भण्डारी स्कूलका तत्कालीन प्रधानाध्यापक हुनुहुन्थ्यो। उहाँसँग मेरो राम्रो परिचय थियो। "भाइ, मलाई टीचर चाहिएको छ, तिमी आउनुपर्छ है," भन्नु भयो। मेरो नियुक्ति भयो। खेलकूदको अभिभारा पनि मलाई सुम्पिनु भयो।

१९४२ देखि यता भारतको स्वाधीनता संग्रामले उग्र रूप लिएर आयो। दार्जीलिङ जिल्लामा स्व॰ डम्बरसिंह गुरुङको नेतृत्वमा अखिल भारतीय गोर्खालीगको जगजगी थियो। भारत विभाजनको विषय लिएर काङ्ग्रेस र मुस्लिम लीगको बीचमा खिंचातानी चरमसीमामा पुगेको थियो। दार्जीलिङप्रति दुवै दलको आ-आफ्नै दावपेच थियो। अर्कोतिर प्लाण्टरहरू यस जिल्लालाई आफ्नो कब्जामा राख्न चाहन्थे। 'अभागोली'-को नारा थियो- **अखण्ड भारतकी जय।** स्व॰ डम्बरसिंह गुरुङ अघिदेखि नै बंगाल विधानसभामा यस जिल्लाका प्रतिनिधि भएका हुनाले विभिन्न दलका राजनीतिज्ञहरू उनलाई आफ्नो हातमा लिन चहान्थे। यस्तै परिस्थितिले स्व॰ डम्बरसिंह गुरुङ र स्व॰ आर॰ पी॰ शाहलाई एका-अर्कामा घनिष्ठतामा ल्यायो। स्व॰ आर॰ पी॰ शाहले मि॰ एडमण्डबाट एक लाख पच्चीस हजारमा किनेको आठ ऐकर जमिन र घरहरू जो मरनिङ साइड नाउँले परिचित थियो, आफ्नी स्वर्गीय माता कुमुदिनीको नाउँमा स्कूल बनाउन,स्व॰ डम्बरसिंह गुरुङका जाति प्रेमको भावनाले र प्रयासले गर्दा, एउटा ट्रस्टको नाउँमा दानस्वरूप प्रदान गरे। स्व॰ डम्बरसिंह गुरुङकै संरक्षणमा रहेको बजारको टाउन स्कूललाई नयाँ स्थान मरनिङ साइडमा सार्ने निर्णय भएपछि फरवरी १९४८ मा हामी तीनजना स्व॰ टी॰ आर॰ बर्मन, पी॰ पी॰ शर्मा र म स्वयं छैटौंदेखि नवौं श्रेणीका छात्रहरूलाई लिएर बड़ो खुशी साथ यता आयौं। बजारदेखि यता खुल्ला ठाउँमा आउन पाउँदा छात्रहरूपनि साह्रै खुशी देखिन्थे। त्यसबेला यो आठ ऐकर जमीनमा तीनवटा घर बाहेक अरू कुनै घर थिएन। अप्रेल १९४८ मा टी॰ आर॰ शर्मा प्रधानाध्यापकको एसयूएमआई-बाट आउनु भयो। एउटा सानो काठको घर (जसमा अहिले क्यान्टिन छ)बानेर दुइ श्रेणी चलाइयौं बाँकी दुइ श्रेणी अर्को सानोघरमा।

प॰ बंगालका गभर्नर स्व॰ कैलाशनाथ काट्जु स्कूल निरीक्षण गर्न आउनु भएको थियो।मूलघरको अघि सानो मैदानमा उहाँलाई स्कूलले स्वागत गरेको थियो त्यसबेला यस्तो सानो स्कूलमा पनि गभर्नरको भिजिट भएको थियो। अर्कोसाल दशौं श्रेणी भएकोले अर्को अलिक ठूलो काठको घर बनाएर (वर्तमान क्राफ्टरूम छ) त्यहाँ दुइ श्रेणी चलाउने काम भयो। १९५० सालमा हाम्रा पहिलो ब्याजका छात्रहरूले म्याट्रिक परीक्षा दिने हुनाले प्रधानाध्यापकले समयमा नै स्वकृतिको निम्ति कलकत्ता विश्वविद्यालयलाई अर्जी पत्र चढ़ाउनु भएको थियो। स्वीकृति नपाएकोले हाम्रो छांत्रहरूले प्राइवेटमा नै परीक्षा दिए। पास पनि भए। यसरी नै स्वीकृति नपाएकोले १९५२ सम्म छात्रहरूले प्राइवेटमा नै परीक्षा दिनुपर्‍यो। स्मृति पत्र चढ़ाउँदा कालेबुङमा सरकारले नै हाइस्कूल शुरु गर्ने, टाउन स्कूललाई हाइस्कूलको दर्जाको श्रेणीमा दिन नसक्ने, सातौं श्रेणीदेखि लिएर माथिका सबै छात्रहरू







सरकारी स्कूललाई दिनु भन्ने जवाफ आयो। पछि तलबाट आएका सरकारी अधिकारीहरूले पनि यही कुरा दोहोऱ्याए। यस्तो कुरा सञ्चालक समिति र यहाँका जनतालाई जँचने, रूचेन छात्रहरू नदिने, हाइस्कूल नै चलाउने दृढ़ संकल्प लिए।

सालैपिछे छात्रहरूको संख्या बढ़दै गयो। ठूलो स्कूल विल्डिङ्ग बनाउने हातमा पैसा थिएन। अर्कोतिर थियो स्वीकृतिको समस्या। अनि समय अघि बढ़दै गयो अनेक घटनाहरू लिएर टी॰ आर॰ शर्माले १९५२-५३-मा कलकत्ता उच्च न्यायालयबाट चुनाउ मुद्दा जितेर आए पनि अभागोली, कालेबुङ शाखामा जुन किसिमको राजनीति गठबन्धन थियो त्यसले गर्दा कुमुदिनी होम्स जुर्मुरिएर खड़ा भएको हो भन्नुमा केही अनुचित नहोला। टी॰ आर॰ शर्मा अघि बड़े। शिक्षाको नाउँमा जनताले साथ दिए। शर्माज्यूका प्रयास र जनताको सहयोग प्रशंसनीय छ। धनी, गरीब सबैले महत्त्वपूर्ण सहायता दिए। कतिले आफ्ना स्वर्गीय पति, पत्नी, पिताका नाउँमा श्रेणी, हल, टावर इत्यादि निर्माण गरिदिने भए। फलस्वरूप आज यस स्कूलमा अरुणिमा, स्व॰ राजा एस॰ टी॰ दोर्जी टावर, धर्महल,गेट तथा श्रेणीहरू पाइन्छन्। यसरी जनताले दिएका पाई-पाईले अरू श्रेणीहरू थपिँदै गए र यो कुमुदिनी यहाँका विभिन्न समुदायका सहयोगको एक उज्ज्वल नमूना हो। यहाँका जनताका सेवा र त्यागको चिनो हो, प्रतीक हो। यही त्यागको फलस्वरूप आज कति शिक्षक -शिक्षिका र अरू कर्मचारीहरू यस स्कूलमा सेवायुक्त छन्, अनि हजारौंका संख्यामा हाम्रा छात्रहरूले शिक्षा हासिल गरिरहेका छन्। ती अज्ञात व्यक्ति तथा व्यक्तिहरू जसले यो स्कूल एउटा शान्ति पाठशालाको रूपमा शुरु गरेका थिए अनि ती व्यक्तिहरू ज-जसका परिश्रम, सेवा र त्यागले आज यो स्कूल यतिको भयो, ती महान् जनहरूलाई हाम्रो हार्दिक श्रद्धाञ्जली। यसरी कुमुदिनी होम्स बनियो। पछि बोर्डबाट स्वीकृति प्राप्त भएपछि सरकारले पनि बिल्डिङ्गको लागि अनुदान दिन थाल्यो। फलस्वरूप अरू श्रेणीहरू थपिए, छात्रावास बनियो। वर्तमान प्रधान अध्यापक सी॰ बी॰ राणाका पालामा अरू थपियो र आज कुमुदिनी होम्सको यो रूप पाउँछौं एउटै ईंटा थपिए पनि त्यो विकास हो।

कण-कण मिलेर पर्वत बनिन्छ। बिल्डिङ्गको विकास साथ-साथै छात्रहरूको पढ़ाई र खेलकूदमा पनि उन्नति हुँदै गयो। पास हुने र फर्स्ट डिभीजनमा आउने छात्रहरूको संख्या बढ़्दै गयो। फूटबलको मैदानमा स्कूलहरूमा सर्वप्रथम- **स्वतन्त्रता दिवस शिल्ड** जित्ने कुमुदिनी होम्स नै थियो। राष्ट्रीय स्तरको **सुब्रत मुखर्जी कप**-मा नर्थ बेङ्गल च्याम्पियन भएर कलकत्तासम्म खेल्न पुगेका थिए-हाम्रा खेलाड़ीहरू। जिल्ला स्तरको तर्फमा हाम्रा छात्रहरू जितेर आउने गर्थे। म्याराथन दौड़मा पनि हाम्रा छात्रहरूले नजितेका होइनन्। यसरी कुमुदिनी होम्सले विभिन्न क्षेत्रमा अग्रणी रहेको थियो। यहाँका शिक्षक-शिक्षिकाहरूको एउटा बेग्लै स्थान थियो। छात्रहरूलाई कुमुदिनी होम्सको छात्र भएकोमा आत्माभिमान थियो। कुमुदिनी होम्सका भूतपूर्व छात्रहरूमा कति डाक्टर, इञ्जीनियर, वकिल, प्राध्यपक, अध्यापकहरू छन् कति सरकारी नोकरीमा उच्चपदस्थ अधिकारी छन्, कति सनेमा। कतिले आफ्नै धन्धा, खेतीपाती गरेर सफल जीवन यापन गरिरहका छन्। ती हुन् शिक्षक-शिक्षिकाहरू तथा कुमुदिनी होम्सको गौरव। माथि उल्लेख गरिएका







सफलताहरू प्रधानाध्यापकदेखि लिएर शिक्षक-शिक्षिका तथा छात्रहरू सबैका कठोर परिश्रमको फल थियो।

कुमुदिनी होम्सका परम्पराले आउने पिँढीहरूलाई सधैं विकासको इशारा गरोस् पथ प्रदर्शन गरोस्। यही छ मेरो शुभकामना। शिक्षिक-शिक्षिका, साथीभाइ, बहिनीहरू र छात्रहरूसँग सधैं हाँसी खुशीसाथ आफ्नो दैनिक कार्य गर्दै आउँदा मलाई समय बितेको पत्तै भएन। ठट्टैमा यो वैंश मात्र होइन जिन्दगी नै गइरहेछ। मैले मेरो नियुक्ति पत्र पाएको हिजै जस्तो लाग्दा-लाग्दै पनि मैले अवकाश लिने समय-दिन चालै नपाइ आइपुगेछ। ३०-६-६२ का दिन स्कूल सञ्चालन समितिका सभापति टी॰ बी॰ ठकुरीज्यूका अध्यक्षतामा प्रधानध्यपक सी॰ बी॰ राणा, शिक्षक-शिक्षिका, भाइ-बहिनीहरू र छात्रहरूले आफ्नो सम्पूर्ण हृदयले मेरो विदाइ समारोह सम्पन्न गरे। त्यस उलक्ष्यमा उहाँहरू सबैलाई मेरो आन्तरिक हृदयदेखि धन्यवाद चड़ाउँदै छात्रहरूका उज्ज्वल भविष्यको कामना गर्दै कुमुदिनी होम्सको मैले सुनेको र जोको इतिहासको एक झलक दर्शाउन प्रयास गरें। अनि आखिरमा फेरि पनि उहाँहरू सबैलाई धन्यवाद दिँदै, हामी आपसको सद्भावना र आत्मियताको आउने दिनहरूमा पनि कामना गर्दै, कुमुदिनी होम्सको समुन्नतिको अपेक्षा राख्दै कार्यरत भाइ-बहिनीहरू प्रतिको, छात्रहरू प्रतिको र स्कूल प्रतिको सम्झना लिएर म विदा भएको थिएँ। ❑

**■ प्रस्तोता- महानन्द पौड्याल**









# ५५ वर्ष अघिको विद्यार्थी जीवन


■ सी॰ के॰ प्रधान

जन्म● १८.११.१९३२, कागे बस्ती, कालेबुङ।
शैक्षिक योग्यता ● प्रवेशिका परीक्षा (द्वितीय श्रेणी) १९५२-मा उत्तीर्ण
सम्मान● विशिष्ट अनि प्रशंसायोग्य सेवाका निम्ति सन् १९८५ मा 'राष्ट्रपति पुलिस पदक'-द्वारा सम्मानित।
सम्प्रति● विभिन्न संघ-संस्थासँग सक्रियरूपले संलग्न रहेर समाज सेवामा व्यस्त।

आजभन्दा ५५ वर्षअघि मेरो शिक्षाको आरम्भ मेरै गाउँको बुनियादी पाठशालामा भयो। त्यहाँबाट चौथो कक्षा उत्तीर्ण गरी म पेदोंगको सन्त जर्ज एम॰ ई॰ स्कूलमा भर्ना भएँ। त्यस समय स्कूलमा छात्रावासको व्यवस्था नहुनाले पेदोंग बाहिरका विद्यार्थीहरूले बहालमा कोठा लिएर बस्नुपर्थ्यो अनि खाना पकाउने सम्पूर्ण कार्य आफै गर्नुपर्थ्यो। यहाँसम्म कि चूह्ला जलाउने दाउराका निम्ति घरबाट फाल्तू पैसा नपाइने हुनाले शनिवारको दिन आधा छुट्टीको मौका छोपेर छेउछाउका जङ्गलबाट हस्ताभरि पुग्ने गरी दाउरा खोजेर ल्याउनै पर्दथ्यो। आइतबारको दिन पनि फुर्सद कहाँ हुन्थ्यो र? यसदिन हामी हिँड़ेरै आ-आफ्ना घर जानैगर्थ्यौं। किनभने, हस्ताभरि पुग्ने सातु-सामलका पोका-पत्यौरा आइतवार नै ल्याई राख्नु पर्दथ्यो। पेय-जलको सुविधा आज झैं नभएकोले गर्दा एक डेड़ माइल टाड़ा गएर धारा-खोल्साको पानी टीनमा थापेर ल्याउनु पर्दथ्यो। रात परेपछि उज्यालोका निम्ति अरू व्यवस्था नभएकोले गर्दा मट्टीतेलको धिब्री अनि लालटेनको उज्यालोमा पढ़ने गर्थ्यौं। त्यति धेर समस्या थिए, सुख-सुविधा प्राप्त थिएनन् हामीलाई आजका विद्यार्थीलाई झैं। तथापि कठोर परिश्रम गर्थ्यौं, निरन्तर विद्याभ्यास गर्थ्यौं। फलतः अनुत्तीर्ण हुनु त पर जावोस्, आफ्नो श्रेणीमा प्रायः नै म पहिलो अथवा दोस्रो हुनेगर्थें। आठौं श्रेणीसम्म यसरी नै पढ़दै गएँ ...हाफ-पेन्ट लगाएर अनि खाली खुट्टा हिंड़ेर। त्यसताक कुनै पनि विद्यालयमा निर्धारित वेशभूषा (स्कूल यूनिफर्म) थिएन। यसरी नै त्यही पाठशालाबाट १९५० सालमा आठौं श्रेणी उत्तीर्ण गरें।

(पेदोंगको एम॰ ई॰ स्कूलमा बर्सेनी एक-एक कक्षा गर्दै बढ़ाइएकोले १९५१ सम्ममा नवौं श्रेणीसम्म शिक्षणको व्यवस्था भइसकेथ्यो।)

आठौं श्रेणी उत्तीर्ण गरेपछि मीन पचासको विदामा घर जाने तर्खर गर्‍यौं। आफ्ना सम्पूर्ण भाँड़ा-कुँड़ा, ओड़ने-ओछ्याउने लुगाफाटा, खाता-किताब इत्यादिको भारी बाँध्यौं र नाम्लो लाएर हिंड़यौं घरतिर। त्यसबेलासम्म मैले भोगेको कष्ट अनि पढ़ाइमा भन्दा धेर समय अन्य कार्यमा







व्यतीत भइदिने बाध्यता सम्झी-सम्झी पेदोंगको स्कूलमा नपढ़ेर कालेबुङकै कुनै स्कूलमा भर्ना हुन पाए पढ़ाइप्रति अझ धेर ध्यान दिनुसकिन्थ्यो कि भन्ने धारणा ममा आइसकेथ्यो। पेदोंगमा पढ्ने इच्छा थिएन यस्तै कारणहरूले गर्दा।

घर आइपुगें। थाप्लोभरि नाम्लोको डाम थियो। केश भुत्लाइएको जस्तो भएथ्यो। गह्रौं भारीले गर्दा ढाड़ पिल्सिए जस्तो भएथ्यो। पसीनाले भिजाएकोथ्यो निथ्रुक्कै। मलाई देखेर परिवारमा सबैजना खुशी भए। मेरो मन त्यति खुशी हुनसकेन। किनभने, पेदोंग स्कूल छाड़ेर कालेबुङ भर्ना हुने मेरो इच्छा बूवाको अघि राख्नु मेरोनिम्ति अरिंगलको गोलामा हात हाल्नुभन्दा कम थिएन। डरलाग्दो हुनुहुन्थ्यो बूवा। उहाँको निर्णय र विचारको विरुद्ध कुरा गर्ने, तर्क गर्ने किञ्चित साहस थिएन ममा। डरले त्यसै नै थर्थर् काम्थें म। र पनि, अर्को स्कूल जाने मेरो विचार उहाँलाई नभनी नहुने, भन्नैपर्ने। ठूलो समस्या थियो मेरोअघि, एउटा अप्ठ्यारो स्थिति थियो मेरो समक्ष। बूढ़ाको गर्जन थाहा थियो परिवारमा सबलाई। भन्नु त पर्ने नै थियो। एक दिन बूवाको हँसिलो मुहार देखेर आँट बटुलें अनि उहाँको अघि गएर अत्यन्तै विनम्र भई रुञ्चे स्वर बनाएर मनको इच्छा पोख्दा एक पटक त उहाँ झनक्क रिसाउनु भयो अनि शिकारमाथि जाइलाग्न आँटेको हिंस्त्रक बाघको जस्तो मुखमुद्रा बनाउनु भयो। त्यसपछि स्पष्टै जवाब दिनुभयो-

"पर्दैन कालेबुङ जानु। पेदोंगमै पढ़। पेदोंगभन्दा क्ता हो क्ता धेर खर्च चाहिन्छ, कालेबुङमा बसेर पढ्नु।"

जुँघा चल्यो, कुरा बुझ्यो भने झैं मैले पनि कुरा बुझें अनि पहिलेभन्दा नम्र भई बिन्ति बिसाएँ-

'तपाईंहरूको दुःख बुझेर पनि पेदोंगभन्दा थोरै खर्चमा म काम चलाउने पूरा कोशिष गर्नेछु।' मैले विश्वास दिलाएँ।

"म सोंच्छु। तेरी मूमासँग सल्लाह गर्छु अनि तँलाई भन्छु।" बूवाले त्यति बेलै स्वीकृति नदिएर आफ्नो निर्णयलाई थाँतिमै राखिदिंदा म अन्योलमा परें, दोधारमा परें अनि ईश्वर भाक्दै उहाँका गोड़ामा ढोगिदिएर त्यहाँबाट पन्सिएँ।

आमा-बूवा अनि परिवारमा सर-सल्लाह भए-नभएको मलाई थाहा भएन तर बूवाबाट कालेबुङ पढ्नुजाने कुरोमा स्वीकृति पाएको दिन मेरो खुट्टा भुइँमा थिएन। त्यस दिन मलाई ठूलो युद्ध जितेर फर्किएको सिपाहीलाई भन्दा धेरै खुशी लागेथ्यो।

१९५१ सालको १५ जनवरी, माघे सङ्क्रान्तिको भोलिपल्ट मैले कालेबुङ जाने तयारी गरें। खाजाका लागि भनेर तरुल, सेलरोटी, फुलौरा इत्यादिको पोका झोलामा हालिदिनु भयो।स्कूल भर्ना अफ्नो खाने खर्चा इत्यादिका निम्ति बूवाबाट १५ रु॰ र आमाबाट ५ रु॰ गरी, जम्मा बीस रुपियाँ हातमा लिएर उहाँहरूलाई ढोग दिई, आशीर्वाद लिई म बाटो लागें। त्यस दिन म अत्यन्तै हर्षित् थिएँ।

विदा लिएपछि आमाको कोमल-हृदयले रुँदै भन्यो- "कहिल्यै नगएको ठाउँ, एक्लै जाँदैछस्। बाटामा खच्चरवाला भोटेहरूबाट जोगिनू, मार्लान् नि बिनसित्ति।"

बूवाले भने एउटा दह्रिलो हृदयको परिचय दिँदै भन्नुभयो- "के को डर! केको भोटे? अठार वर्षको लाठे भइसक्यो। नचलाई, नजिस्काई कसैले केही गर्दैन।"







मेरा कतिपय सर-सामान पेदोंगमै छुटेका हुनाले मैले घरबाट विदा लिएपछि सोझै पेदोंग जानुपर्ने थियो। पैदलै पेदोंग पुगेर आफ्ना सर-सामान इत्यादि लिएर स्ट्याण्डमा आई कालेबुङ जाने गाड़ी खोजें। आज झैं गाड़ी थिएनन्। त्यसैले गर्दा हिंड़े पैदलै। गन्तव्य थियो-कहिल्यै नगएको शहर कालेबुङ र कहिल्यै नदेखेको भए पनि मनले खाएको स्कूल-**कुमुदिनी विद्याश्रम**। खच्चरहरूको ताँत, अलकत्रा नओछ्याइएको सड़क, आम्दो भोटेहरूका हूल देखेर बाटाभरि डर लागिरहेकै भए पनि कालेबुङ मेरो सपनाको नगरी थियो, पुग्नै पर्ने अनि नपुगी नहुने। धूलोसरि फुस्रै-धुस्रै र लखतरान भएर बेलुकीपख पुगें कालेबुङ अनि बाघधाराको ओह्रालो-ओह्रालै झरें-कुमुदिनी विद्याश्रम।

प्रधान अध्यापकको निवास चिन्हेपछि म सोझै उहाँको ढोका ढक्‌ढकाउन पुगें। दौह्रा-सुरुवाल, कालो कोट, कालै नेपाली टोपी लगाएका, ठूल्ठूला आँखामाथि बाक्लो आँखीभौं अनि हँसिलो ओंठमाथि बाक्लो कालो जुँघा भएका एक जना छरितो व्यक्तिले ढोका खोलेर मलाई प्रश्न गर्नुभयो-

"कसलाई खोजेको? के काम छ? कहाँबाट आयौ?"

मलाई टीकाराम शर्मा नै मेरो अघि उभिनुभएको छ भन्ने कुरा अनुमान लाउनु धेर समय लागेन। उहाँका पछिपछि उहाँकी श्रीमती पनि बाहिर निस्किनु भयो। मैले दुवैलाई नमस्कार गरिदिएँ।

मैले नबिराई वृत्तान्त बताएपछि उहाँले थप सोध्नी गर्नुभयो- "सन्त जर्ज जस्तो राम्रो स्कूल किन छाड्ने विचार गऱ्यौ त?"

मैले सबै कारणहरू ढाकछोप नगरी विस्तारपूर्वक सुनाउँदा टीकाराम शर्माले भन्नुभयो- "ट्रान्सफर सर्टिफिकेट लिएर आउनू। एडमिसन टेस्ट भने तिमीले दिनुपर्दैन।"

मलाई के चाहिएकोथ्यो र अरू? खुशी भएँ। नवौं श्रेणीमा भर्ना भएँ। पेदोंगमा आठौं कक्षामा आठ जना मात्र विद्यार्थी थिए भने कुमुदिनीमा ४७ जना विद्यार्थी देख्दा म दंगदास थिएँ अनि मैले आफैंलाई नै आफूले भनेकोथिएँ-

'चन्द्रे! पेदोंगमा त आठ जनामा फर्स्ट-सेकेण्ड हुँदा मै हुँ भन्थिस्, यहाँ ४७ जनामा डरलाग्दो खटेर पास मात्र भइस् भने पनि धेरै सम्झी।'

सुरुबुरु मेरो पढ़ाइ ठीकै चल्दैगरेको बेला एक दिन संस्कृत शिक्षक टीकाराम शर्माले मलाई बोलाएर भन्नुभयो- "चन्द्रकुमार तिमीले पेदोंगमा हिन्दी एउटा विषय लिएर पढ़ेका रहेछौ। यहाँ त हिन्दी शिक्षक नहुनाले आफै नै पढ्नुपर्छ। हिन्दीको बदली यहाँ संस्कृत पढ़ाइन्छ। संस्कृत पनि सातौं श्रेणीदेखि नै शुरु हुन्छ। के गर्छौ तिमी? हिन्दी नै लिने कि संस्कृत पढ़ने आँट गर्ने?"

फेरि एउटा समस्या आइलाग्यो मलाई। एक मन त हिन्दी नै लिन्छु भनिदिनुपऱ्यो जस्तो लाग्यो, अर्को मनले भन्यो- शिक्षक बिनाको पढ़ाइभन्दा बरु हिन्दी नलिएर टीकाराम शर्मा जस्ता शिक्षकले पढ़ाउने विषय लिनु नै उचित। मेरा सहपाठीहरू संस्कृतमा पांरगत थिए भने म थिएँ लद्दूराम। तर संस्कृत शिक्षकबाट प्रेरणा र साहस प्राप्त गरेर अनि संस्कृतमा अरूसरह अपेक्षित स्तर प्राप्तगर्ने दृढ़ संकल्प गरिवरि संस्कृत घोक्नु र रट्नुथालें। मलाई रटेको देखेर संस्कृत निकै जान्ने मेरा सहपाठीहरू मलाई खिज्याउँदै भन्नेगर्थे-

*रट चन्द्रे रट्टनदास,*







*रट्टूँला भन्ने कत्रो आश,*
*रट्टदा रट्दै गयो सास।*

मलाई साथीहरूको टीका-टिप्पणीले किञ्चित प्रभाव पारेन। म एकचित्त भई अध्ययनमा लागिरहें, रट्नु पर्ने जति रटिरहें। मेरो संकल्प अनुसार अन्तसम्म लागिरहें। एक दिन संस्कृत शिक्षकले मलाई कक्षाको अघिल्तिर बोलाएर उभ्याउँदा मलाई हुनुसम्मको डर लागेथ्यो अनि सम्झोको थिएँ- "एई चन्द्रे! भेटनेभइस् बाबु, आज त तैंले! हाँस्नेभए तेरा साथीहरू!!"

तर कुरो बेग्लै पो रहेछ। टीकाराम शर्माले मलाई देखाउँदै अरू विद्यार्थीहरूलाई भन्नुभयो-

"यो चन्द्रकुमारलाई हेर तिमीहरू। नवौं कक्षादेखि मात्र संस्कृत लिएर पढ़ेको यो केटा र तिमीहरूले सातौं कक्षादेखि नै पढ़ेका। तिमीहरू भन्दा धेरै मार्क्स ल्याउँदैछ यसले। धिक्कार छ तिमीहरूलाई।"

आफ्ना शिक्षकबाट यत्रो प्रशंसा पाउनु मेरो निम्ति सानु घटना थिएन। तर आश्चर्यको विषय पनि थिएन नै। टीकाराम शर्माको शिक्षण विधि नै अत्यन्त सरल, सरस र व्यवहारिक हुनाले यो सम्भव भएथ्यो भन्ने सत्य आज पनि मलाई लागिरहन्छ। शिक्षणमा उहाँ यति धेरै पारंगत हुनुहुन्थ्यो कि 'मुना-मदन' पढ़ाउँदा प्रायः सबै नै विद्यार्थीहरूका आँखा आँसुले भिजेका हुन्थे भने म त केटीहरू झैं सुकँसुकँ गर्दै रोइदिन्थें। त्यति धेर प्रभाव छाड्दथ्यो उहाँको शिक्षणले। यस्ता धुरन्धर शिक्षक हुनुहुन्थ्यो टीकाराम सर।

मैले अन्य साथीहरूको दाँजोमा आइपुग्नका निम्ति पहिलो वर्षमा अत्यन्तै कठोर परिश्रम गर्नु परेथ्यो।यसैको फलस्वरूप मेरा सहपाठी मित्रहरू रामकृष्ण शर्मा, लोकनाश शर्मा अनि पदमबहादुर राईसँग प्रतिस्पर्धा गर्नसक्ने शैक्षिक स्तरमा म पुग्नसकें। टीकाराम शर्माले कक्षामा प्रायः जसो हामीहरूको नाउँ लिएर सबैको समक्ष भन्नुहुन्थ्यो-

"तिमीहरू चार जनाबाट मैले धेरै आशा राखेको छु। पाठशालाको नाम उज्यालो पार्ने कोशिष गर। अझ परिश्रम गर।"

नवौं श्रेणीको शिक्षा-सत्र यस्तै कतिपय साना-ठूला घटनाहरूसँगै बितेर गयो। ४७ जनाबाट हामी ४० जना मात्र दशौं श्रेणीमा पुग्यौं। मीन पचासको विदा सिद्धिएपछि सन् १९५२ सालमा दशौं श्रेणीको शिक्षा सत्रको श्रीगणेश भयो। पाठशाला लागेर पढ़ाइ शुरु भएकै केही दिनपछि उहाँले कक्षामा आएर अत्यन्तै डरलाग्दो गरी चेताउनी दिनुभयो, आफ्नो अध्ययनप्रति सचेत र सतर्क रहने उपदेश दिनुभयो-

"तिमीहरू चालीस जना दशौं श्रेणीमा छौ। पूरा परिश्रम गरेर पढ़ेनौ भने प्रवेशिका परीक्षाका निम्ति तिमीहरूलाई छाड़दिन। रोकिदिन्छु यसै क्लासमा। किनभने, हामी पश्चिम बंगाल शिक्षा परिषद्‌बाट मान्यता प्राप्त गराउने चाँजोमा लागिपरेका छौं। मान्यता निर्भर गर्छ- तिमीहरूको प्रवेशिका परीक्षाको परीक्षा-फलमाथि। यसकारण ढुक्क भएर नबस्। प्रथम श्रेणीका निम्ति चाहिने मार्क्स- सेन्ट अपमा ल्याउनेलाई सेन्ट-अप-मै रोकिदिने हाम्रो अन्तिम निर्णय भएसकेको छ।"

त्यस दिन हामी सब ढुक्‌ढुक त भयौं नै भयौं, मेरो त एउटा अज्ञात भयले गर्दा भित्रबाट नै मुटु ढुकढुक गरेर आयो। बूवा सम्झिएँ, पेदोंग स्कूल सम्झिएँ अनि पेदोंग स्कूलको पाप लागे जस्तो लाग्यो मलाई। तथापि, अठोट गरें, कम्मर कसें अनि रात-







दिन एक गरेर पढ्न थालेँ। मैले दृढ़ संकल्प गरेँ त्यस दिन्-

'---रात दिन एक गरेर पढ्छु। समयको सदुपयोग गर्छु। मैले आफ्नो अध्ययन पूर्णरूपले र पाठ्यक्रम ठीकसँग छिचोलेर पढेँ भने फेल हुने प्रश्नै उठ्दैन।'

गरेँ पनि त्यसै। निरन्तर लागिरहेँ पढाइमा। जाड़ो-गर्मी घाम-पानी, घरको समस्या कुनै कुरालाई मैले मेरो अध्ययनमा बाधा हाल्नु दिइन। मैले लक्ष्य राखेको थिएँ कि म सेन्ट-अप-मा मात्र होइन, तर फाइनलमा पनि छिरेर देखाउने छु।

टीकाराम सरले पाठशालालाई मान्यता दिलाउने एउटा अत्यन्तै महत्त्वपूर्ण कुरोलाई ध्यानमा राखी सेन्ट-अप परीक्षाको फलको आधारमा हामी १७ जना परीक्षार्थीहरूलाई मात्र फाइनल परीक्षामा बस्ने अनुमती प्रदान गर्नुभयो। हामी पास हुनेहरू रमाएका थियौं अनि आफ्नो परिश्रम अनुसार फल पाएर खुशी भएकाथ्यौं भने सेन्ट-अप-मा रोकिएका साथीहरू ग्वाँग्वाँ रोइदिएका थिए। सेन्ट-अप-मा म दोस्रो स्थानमा थिएँ भने प्रथम भए रामकृष्ण शर्मा।

सेन्ट अप परीक्षापछि त हामी अझ डरलाग्दो गरी पढ्नथाल्यौं। टीकाराम सरको देखरेखमा कोचिङ्ग क्लास चलेपछि त झन् हामीले हाम्रो आफ्नो व्यक्तिगत सुख-सुविधा, खाना-पीना धरि बिर्सिदिएकाथ्यौं। हामी सबैको सामू अर्जुनले मात्र देखेका माछाको आँखा थियो।

सन् १९५३-को मार्च महीनामा प्रवेशिका परीक्षा आरम्भ भयो। परीक्षा-केन्द्र थियो एस॰यू॰एम॰ आई॰ परीक्षको दिनहरूमा पनि हामी खाकी हाफ-पेन्ट, आधा बाहुला भएको कमेज र खाली खुट्टै परीक्षा दिनु जान्थ्यौं।

गणित परीक्षाको दिन घटेको एउटा घटना आज पनि मलाई झल्झल्ति याद आउँछ। गणितमा म राम्रो छु अनि राम्रो अङ्क सहित उत्तीर्ण हुन्छु भन्ने विश्वास थियो ममा। गणितमा पनि बीज-गणित साह्रै सजिलो लाग्थ्यो। यसैले गर्दा गणितको परीक्षाको दिन परीक्षा भवनमा गणितको प्रश्न हातमा पर्ने बित्तिकै निर्क्के फुर्के भएर बीज गणितका प्रश्नहरू नै हल गर्नुथालेँ। एक घण्टासम्म त्यसमा अल्झिँदा पनि एउटै प्रश्नको उत्तर नमिल्दा म आत्तिएँ अनि भन्भन्ति रिङ्गाटा छुट्यो, के गरूँ कसो गरूँ भएँ। मेरो मनः स्थिति बुझेर परीक्षा-निरीक्षक खटिएकाले हलमै उपस्थिति टीकाराम सरले छेउमा आएर मलाई सोध्नुभयो-

"एई चन्द्र! के भयो? नर्भस भए जस्तो छस् त?"

मैले मेरो समस्या डराउँदै भए पनि भनिदिँदा उहाँले मलाई अत्यन्तै मीठा शब्दमा भन्नुभयो-

"एकै छिन बाहिर गएर हावा खाएर आऊ। प्रश्न-पत्र सजिलो छ, तिमी आत्तिएर नर्भस भएका मात्र हौ। बाहिर गएर आइवरि गर्नुथाल, तिमीले नसक्ने केही छैन।"

बाहिर गएर फर्केपछि हतार-हतार गणितका प्रश्नहरू हल गर्नलागेँ। प्रश्न-पत्रका सबै प्रश्नहरू गरिसकेपछि आफै जोड़ी हेर्दा बीज-गणित ३५ मार्कको, अङ्कगणित २० मार्कको उत्तर मिलेछ। समयाभावले रेखागणित भने लटङ्गपटङ्ग मात्र गरेँ। गणितमा प्रथम श्रेणीमा चाहिने मार्क लिएर म द्वितीय श्रेणीमा उत्तीर्ण







भएँ तर गणितमा *स्टार* ल्याएर देखाइछाड्छु भन्ने धोको पूरा भएन।

प्रवेशिका परीक्षाको फलले टीकाराम शर्मालाई दुःख र निराश तुल्याएथ्यो। किनभने, जम्मा ९ जना मात्र उत्तीर्ण भएका थियौं, त्यसमा पनि प्रथम श्रेणीमा उत्तीर्ण कोही भएन। द्वितीय श्रेणीमा उत्तीर्ण हुने हामी चार जना मात्र थियौं। जे होस्, त्यही वर्षदेखि नै हाई-स्कूलको रूपमा मान्यता प्राप्त गऱ्यो। यो हामी सबैका निम्ति गर्वको विषय थियो।

त्यसताक हामीलाई शिक्षा-दान गर्ने गुरुजनहरूमा ज्ञापन सर, बर्मन सर, पी॰ पी॰ शर्मा सर, विजय सुब्बा (चन्द्रहांग) सर र टी॰ आर॰ सरको अझ सम्झना आइबस्छ। बद्री सर र विजय सुब्बा सरसँग झुक्कल पुक्कलमा यदाकदा भेट भइरहे तापनि अन्य गुरुजनहरूका पार्थिव शरीर पञ्चतत्वमा लीन भइसके।

प्रवेशिका परीक्षापछि मैले अझ अघि बढ्ने मेरा इच्छाहरूलाई बलजफ्ती दबाउनुपऱ्यो। कारण, त्यसपछि त पढाइका निम्ति दार्जीलिङ जान पर्दथ्यो। मैले घरको आर्थिक अवस्था र मेरा अरू मसिना भाइ-बहिनीको भविष्यलाई ध्यानमा राखी नपढ्ने नै अठोट गरिविरि सेनामा भर्ना हुने आफ्नो इच्छा बूवा समक्ष राख्दा बूवाले पुलिसको नोकरी गर्ने सल्लाह दिनुभयो। बूवाका वचनलाई परम्-वचन ठानी आफ्नो इच्छालाई मनभित्रै थन्काएर म एउटा कन्स्टेबको पदमा पुलिसमा भर्ना भई डी॰ एस॰ पी॰-को पदमा सन् १९९२-मा सेवा निवृत्त भएँ।

यस संस्करणको माध्यद्वारा म आजका विद्यार्थीवर्गलाई के सन्देश दिनु चाहन्छु भने हाम्रा गुरुजन अनि माता-पिता नै हाम्रा हितचिन्तक हुन्। उनीहरूकै मार्ग-दर्शन र दिशा-निर्देशन अनुसार नै चलेदेखि हाम्रो भविष्य उज्वल हुनेछ। हामी जीवनमा सफल हुनेछौं अनि एउटा योग्य नागरिकको भूमिका निर्वाह गर्ने सक्षमता हामीमा आउने छ।

अध्ययन तिमीहरूलाई तिखार्ने छ, सुधार्ने छ। अर्तीले सोझ्याउने छ अनि आशीर्वचनले सफलता प्रदान गर्नेछ। ❐









# कुमुदिनीको नाउँमा एउटा पत्र


कृबु संयमी

वास्तविक● नाम कृष्ण बुड़ाथोकी

पेशा● शिक्षक

सम्पादन ●ज्वालामुखी, चौबन्दी, नवज्योती, निर्माण, उद्गार, नमस्ते, सरोकार।

प्रकाशित कृति ●जीवन यात्राका सहयात्री (२०००)

प्रकाशोन्मुख कृति● एक बिटा संस्मरण

कृ बु संयमी


*प्यारो कुमुदिनी,*

**अर्द्ध शताब्दी उमेर टेकेकोमा तिमीलाई हार्दिक बधाई!**

६७ सालमै तिमीलाई छाड़ेर आएदेखि अस्ति २४ मई १९९८-को दिन मात्र तिम्रो प्राङ्गणमा पाइला राख्ने दुर्लभ अवसर जुर्‍यो- झण्डै ३१ वर्षपछि। त्यो पनि स्वर्ण जयन्ती मनाउने भएको दुर्लभ खुशीयालीमा। आफूलाई रोक्न सकिनँ भूतपूर्व छात्र भएको नाताले। कति उत्कट इच्छा थियो तिमीलाई भेट्ने। हिजो-अस्ति भर्खरै त हो म जस्तै तिम्रो एक भूतपूर्व छात्रले एउटा मीठो संस्मरण 'सुनचरी'-मा लेख्नुभएको पढ़ेँ र आफूलाई कता-कता छुयो। तिम्रो सम्झनाले सतायो र केही शब्द लेख्न बसेको छु भाव विभोर भएर।

मात्र केही वर्षले त तिमी मभन्दा ज्येष्ठ रहेछौ। पाँचौदेखि नवौं श्रेणीसम्म (बीचमै छाड़ेको) तिम्रै शरणमा अध्ययन गरेर जीवनको एक अध्याय बिताएको हुँ मैले पनि। स्कूल टाड़ो थियो घरदेखि निकै। ओहोर-दोहोर गर्दा ६ माइलभन्दा कम त होइन। दिउँसो उधुम भोक लाग्थ्यो। भएको बेला बस् चारानाको ठाउँमा दुइ आनाले पनि भोकको ज्वाला निभाइन्थ्यो। थुप्रो हुन्थ्यो 'होम वर्क'। स्कूलको 'होम वार्क' गर्नु कि घरकै 'होम वर्क' गर्नु हुन्थ्यो बेलुकी ता। भोक र थकाइ मेरा एकान्तका अभिन्न साथी थिए। भात खाएर 'होम वर्क' गर्दा नगर्दा ९-१० बज्थ्यो राति र स्वयम् निद्राले क्षणभरमै भात भइन्थ्यो। कोही बेला पढ़दा-पढ़दै भुसुक्क निदाएको भेटिँदा यस्तो चड़कन खाइन्थ्यो कि फेरि रातभर डरले कता भाग्थ्यो कता निद्रा। स्कूलबाट गर्नदिएको एच° /डब्लू नगरी जाउँ त उतै खाइने गोदाइ अनि त्यही डरले स्कूलै नजाउँ भने घरमा कठोर अनुशासन व्याप्त। आमा, दिदी र दाज्यू सबै स्कूलको मामलामा सतर्क। स्कूल भाग्ने कल्पना पनि गर्न नसकिने तथापि त्यसबेला दौंतारीहरूमा सुसंगतभन्दा नै अधिक पाइन्थे। एउटा कुरा, उल्लेख गरेकै छैन मैले, सो के भने बिहान स्कूल जाँदा एउटा फौजी झोलामा सब्जी (घरको) भरेर बजारमा बेच्नु लान्थे र त्यही पैसाले घर फर्कँदा







रासन बोकेर ल्याउँथें।

पाठ राम्ररी याद (कण्ठस्थ) नगरी स्कूल जाँदा अङ्ग्रेजी पढ़ाउनु हुने सिमिक 'सर'को सिर्कनाले सुम्ला बस्थ्यो हातमा। देवान 'सर' एक गुच्छा बेत (साना साना बाँसका लौरीहरू)-ले ढाँड़भरि सजायको सहीछाप हुन्थ्यो। अलि ठूलो श्रेणीमा पुगेपछि रोंगोङ 'सर', तिवारी 'सर' र भरत 'सर'-हरूको ट्वाकसिङले टाउकोभरि टुट्टुल्काको घारी। कान्ति 'सर' र मदन 'सर'-को अनुहार हेर्नै डर लाग्ने। पासाङ छिरिङ 'सर'-ले मुसुमुसु हाँस्दै चिमोटेपछि हुरुक्क हुन्थ्यौं। टी॰ बी॰ 'सर' र लामा 'सर'-ले साहित्य पढ़ाउँदा मखख पर्थ्यौं। सायद त्यही बेलादेखि साहित्यको रसमा भिज्न थालेको थिएँ कि? आज ती पूज्य गुरुहरूलाई जति सम्झ्यो उति श्रद्धाभावले ओतप्रोत हुन्छु। भेटुँ भेटुँको चाहनाले व्याकुल पार्छ। त्यसैले त आएँ कुमुदिनी, तिमीलाई भेट्न। तिनताकका तिमीलाई स्थापना गर्ने प्र॰ अ॰ स्वनामधन्य श्री टीकाराम शर्मा मात्र होइन हरेक अध्यापक पोख्त, पारखी एवं अनुभवी थिए। घरमा आयो कि मेरा श्रद्धेय माइला दाज्यू श्री बी॰ एल॰ छेत्रीको कठोर अनुशासन अर्कोतिर स्कूलको त्यो अनुशासनबद्ध वातावरण नहुँदो हो मैले यस संसारको कुन अज्ञानतारूपी अँध्यारो गुफामा जीवन बितिरहेको हुन्थ्यो होला अनुमान लगाउन कठिन छैन। ती गुरुज्यूहरूको सामयिक गोदाइ अनि आमा, दिदी, दाज्यूहरूको नियमित निगरानीले नै मलाई मेरो जीवनमा यति लामो यात्रा गर्ने आत्मबल प्रदान गरेको रहेछ। यही आभार प्रकट गर्न साक्षात रूपमा यसपल्ट तिम्रो प्राङ्गणमा पाइला टेक्न पुगेको थिएँ। त्यसबेला मानौं तीर्थस्थल नै लागेथ्यो कुमुदिनी विद्याश्रम।

बसुन्धरा 'कम्प्लेक्स'मा लेखकहरूको सहकारी प्रकाशन खोल्ने विषयक सभामा उपस्थित भइसकेर त्यहाँ हतार-हतार पुग्दा बेलुकीको २:३० बजिसकेको थियो। जसै म त्यहाँ पुगें एउटा ठूलो 'गेट' अझ पनि ठिङ्ग उभिरहेकै थियो। पाँचौ श्रेणी पढ्दाकै घटना होला मलाई सम्झना आयो त्यो प्रवेशद्वारको ढोका देखेर। एक दिन त्यसमा झुण्डेर पिङ खेलिरहेको थिएँ। समय थियो टिफिन-को। अनायस मेरो कान पछिल्तिरबाट जोड़ले समातियो र यसो पछि फर्केर हेरेको त बाफ् रे उनै प्र॰ अध्यापक रहेछन्- अग्ला-अग्ला, आँखा काला-काला, गोरा-गोरा रातापिरा हेर्दै डरलाग्दा। म तत्काल हात झट्कारेर फुत्कें। धन्य! आमाले त्यो दिन केशमा तेल कानसम्म बग्ने गरी हालिदिएकी थिइन् र मात्रै!! अचम्भ लाग्थ्यो पछिसम्म कि त्यो खाजा खाने छुट्टीमा पनि उनी चाहिं घरमा (नजिकैको) निर्धक्क भएर बस्दैनथे। चारैतिर नजर राख्नु निरन्तर आफ्नो परिवेशलाई निरीक्षण गर्नु मानौं उनको नियमित कर्त्तव्य थियो। आज आफै पनि शिक्षण पेशामा धेरै अनुभव प्राप्त गरिसकेकोले होला त्यो सानो सामान्य घटनामा ठूलो रहस्य र महत्त्व लुकेको पाउँछु। यस सन्दर्भमा मलाई एउटा अङ्ग्रेजीको उक्ति स्मरण भयो-Observation more than books, experience rather than persons are the prime educators.

शिक्षाको सिलसिला केवल पुस्तक र व्यक्तिबाट नभएर प्रकृतिको गहन निरीक्षण गर्ने ती व्यक्तिविशेषका अनुभवबाट भएको हो भन्ने अनुमानसँग माथिको उक्ति मेल खान्छ। श्री टीकाराम शर्मा उनी त्यसै सफल र यशस्वी भएका होइनन्। यिनै भरपूर गुणहरू युक्त थिए उनमा। यही गुणहरूको







अनिकाल छ हिजो आज। यसैले गुणात्मक शिक्षाको त कुरै छाड़ौ दिन-दिनै अनुशासनहीनता, उच्छृङ्खलाता साथै मनोमालिन्य बढ़ेर गएको देखिन्छ कतिपय स्कूलहरूमा। स्वर्ग जयन्तीकै दिन पनि तिम्रो प्राङ्गणमा यस्ता थुप्रै केटाहरू देखेँ जसको कान कानमा कुण्डल झुण्डिएको थियो। उहीहरू विद्यार्थी होइनन् भने कुरा अर्कै हो। स्कूलको प्रशासन हातमा लिने प्रमुख व्यक्तिमा केवल आवश्यक डिग्री र भाषा ज्ञान यथेष्ठ हुँदैन। थुप्रै-थुप्रै बालक-बालिकाको भविष्य निर्धारित हुने विद्यालयमा योग्य प्रशासकमा अनान्य गुणहरू पनि हुनुपर्ने महसुस गरें मैले। स्मृतिपटको क्षणिक उच्छवासबाट तत्काल मुक्त अब म प्रवेश गर्छु स्कूल परिसरमा।

सांस्कृतिक कार्यक्रमको रसमा डुबेको भीड़लाई चिर्दै म अनि बड़ें। भाग्यवश 'चिफ प्रिफेक्ट'सँग त्यहीं भेट भयो। आफ्नो इच्छा र ध्येय जाहेर गरी अगुवाइ गरिमागें उसलाई। अघि बढ़्दा बढ़्दै मञ्चमा विद्यार्थीवर्गले अङ्ग्रजी गीतको क्यासेट लगाएर पाश्चात्य शैलीमा नाचिरहेको दृश्य देख्दा मन भरङ्ग भयो। सायद यो मेरै पछौटेपनको द्योतक हो कि? आफैलाई धिक्कारें। एकजना भद्र प्रौढ़ पुरुष (अध्यापक?)-लाई सुम्पेपछि उ फर्क्यो। आफ्नो परिचय दिँदै सर्वप्रथम वर्त्तमान प्र॰ अ॰-लाई भेट्ने मनसाय व्यक्त गरेपछि उहाँले तत्परतासाथ धर्म हलभित्र लानुभयो। उहाँलाई देख्नासाथ अभिवादन टक्राएँ ती भद्र अध्यापक महोदयले मेरो इच्छानुसार फेरि तिम्रा संस्थापक तथा पूर्व प्र॰ अ॰ बस्नुभएको डेरातिर डोऱ्याउनु भयो। उहाँको नाउँ मैले सोधिनँ तर कुरैकुरामा उहाँ मभन्दा एक वर्षपछि त्यही विद्याश्रमबाट निस्कनु भएको'रे र त्यहीं पछिबाट अध्यापन गर्नुहुँदैरहेछ। खुबै शिष्ट हुनुहुन्थ्यो। त्यहाँ पस्नासाथ मैले पुराना सहपाठी (कुमुदिनीकै) सर्वश्री तारानाथ सुवेदी र शङ्कर प्रधानलाई देखिहालें। फेरि त्यहीं भेट भयो सेतै फुलेका बयोबृद्ध आदरणीय श्री टी॰ आर॰ शर्मा। खुट्टामै ढोगिदिएँ गुरुमासहित। त्यसरी दर्शन पाउँदा गद्गद् भएँ। आत्मीयतापूर्वक एकक्षण मलाई च्याप्प समाएर बैठकमा राखे। मेरा पुराना गुरुज्यू सेवानिवृत्त श्री पी॰ एल॰ सुब्बा 'सर' पनि साथमै हुनुहुन्थ्यो। अतीतका केही मीठा सम्झनाहरू खोतल्यौं। भेटघाटको आनन्दमा रमायौं। श्रद्धेय टी॰ आर॰ शर्मा ७८ वर्ष पुग्नुभएछ अनि गुरुमा उहाँभन्दा २ वर्षले मात्र कम तथापि स्वस्थ। कुमुदिनी होम्सले त्यो गौरव उहाँहरूको हँसिलो मुहारमा प्रतिबिम्बत हुन्थ्यो। त्यसपछि विदा लिएर बाहिर निस्कैं। हेरें चारैतिर कति परिवर्त्तन भएछ त्यो लामो अवधिमा। केटाकेटी खेल्ने पार्क अनि व्यायाम (जिम्नास्टिक) गर्ने त्यो ठाउँको नामोनिसान थिएन। 'स्कूल डे' कै छेकमा ढकमक्क फुल्ने अनि भुइँभरि नीलै फूलहरू न्यौछावर गर्ने जेकेरण्डा कहिल्यै ढलेछ। एकक्षण त ट्वाल्ल परें अनि बिस्तारै बड़ें फेरि स्कूलतिरै आशा यो राख्दै कि कतै भेटिएला अन्य गुरुजन पनि। नभन्दै भरत 'सर'-लाई भटें। पञ्जीकृत भइहाल्नुपर्ने सो कार्यालयतर्फ। बुङ नगरपाल अध्यक्ष साथै मेरा सहपाठी पनि। फेरि त्यहीं भेट भयो कवि मोतीप्रसाद शर्मासँग। उनी पनि तिम्रै भूतपूर्व विद्यार्थी। विलम्बसाथ पुगेर होला अन्य गुरुज्यूहरूको दर्शन भएन। कति आउन नपाएका होलान् कति स्वर्गारोहण भइसके। तिनमा आर॰ आर॰ देवान र रोगोंग 'सर' थिए।

तीस-चालीस मिनट यताउता चहलपहल गरेपश्चात् आफू टाढ़ै फर्कनुपर्ने पनि हुनाले एकपल्ट







अन्तमा नियालेर हेरेँ कतै यही नै अन्तिम दर्शन हुने त होइन? मौन अनुमति माग्दै त्यहाँबाट प्रस्थान भएँ। बजारसम्म गफ गर्ने साथीको रूपमा थिए कवि मोतीप्रसाद भाइ। बाटो काटिएको थाहै भएन। हुनु त भूतपूर्व छात्रहरूको खास जमघट र कार्यक्रम २७ मईको दिन थियो जुन दिन भूतपूर्वहरूको अभूतपूर्व सङ्गम भयो होला। म चाहिँ चाहेर पनि सम्मिलत हुनसकिनँ। आफ्नो तर्फबाट सहानुभूतिपूर्वक किञ्चित सहयोग पुर्‍याउँथें हुँला तर मेरो विवशतालाई क्षमा गर कुमुदिनी! मलाई क्षमा गर। ऋण तिर्न नसके पनि यो जुनीमा।

एउटा कुरा चाहिँ मलाई खट्क्यो मनमा सो के भने तिम्रा विगतका सबै गौरान्वित वस्तुहरूको प्रदर्शनी देखिनँ त्यहाँ। भएर पनि मैले नदेखेको हो कि? धन्यवाद!

❒ १६ जून १९९८ सुनचरी-बाट साभार







# अन्तिम इच्छा स्व° टीकाराम शर्माको


लीलाबल घिमिरे

● एस° आई° बी°-मा दीर्घकालीन सेवा गरेपछि ए° सी° आई° ओ°-१ को पदमा पुगेर सेवा निवृत्त भए पश्चात् विभिन्न संघ-संस्थासँग संलग्नरही समाज-सेवामा लागिपर्नु भएको छ।

कुमुदिनी बगैंचामा, थिए विद्यार्थी मेरा फूल
सहयोगी साथीहरू, गर्दथे कसरी माया विपुल।

फुलेर ती फूलहरू, छर्दै सौन्दर्य मगमगाइरहून्
कोमल ती पुष्पहरू, गौरव समाजका बनिरहून्।

मेरा कर्म र धर्मले, डोहोऱ्याओस् सबलाई दिन प्रतिदिन
हार बनून् फूलहरू, रहोस् कुमुदिनी सदा अविच्छिन्न।

नरहे पनि म, संसारको यस क्रीड़ा-प्रांगणमा
तारा मण्डलबाट, रहने छु चिहाउँदै तिम्रै प्रिय आँगनमा।

मेरा सारा कल्पना, तिम्रा सफलताहरूसँग बाँच्नेछन्
बासना छर्दै वरपर, मेरा फूलहरू खित्खित् हाँस्नेछन्।

यही छ कामना, यही छन् शब्द आशीषका
रहोस् सदा एकता, कुमुदिनीका सब विद्यार्थीहरूमा।

❐







# यूनिफर्मको त्यो शर्ट!


नगेन्द्र हमाल

नाउँ● नगेन्द्र हमाल(भू॰ पू॰ छात्र)
जन्म● ३० अप्रेल १९४२, कालेबुङ
शिक्षा● बी॰ ए॰, बी॰ एड॰
पेशा● सिक्किम सरकारको शिक्षा विभागमा सह-शिक्षकको रूपमा १९६७-मा नियुक्त अनि २००२-मा सिक्किम सरकारको शिक्षा विभागका उप-निर्देशकको पदमा सेवानिवृत्त।

सन् १९५७ सालमा म कुमुदिनी विद्याश्रमको सातौं श्रेणीको विद्यार्थी थिएँ। यो घटना त्यही वर्ष १५ अगस्टको दिन घटेको हो।

सबैलाई थाहा भएकै कुरो हो कि कालेबुङका लागि १५ अगस्ट भनेको एउटा महान चाड़ नै हो। स्वतन्त्रता दिवस आउनुभन्दा धेरै अघिदेखि नै यहाँका मानिसहरूमा एक प्रकारको उल्लास, हर्ष अनि रमाहटले मुहार हँसिलो पारिदिंदछ। घर-घरमा यस विषयमा कुराकानी हुनथाल्छ, पन्ध्र अगस्टको दिन सबैले नै आ-आफ्ना योजना बनाउँछन्। नयाँ लुगा सिलाउँछन्। बजार जान्छन्, मेलाटारको कार्यक्रम हेर्छन्, घुमफिर गर्छन् अनि चिया पसल र हुटेलतिरै खाएर बेलुकी घर फिर्छन्। विद्यार्थीहरूको त झन् कुरै छैन। जतिसक्दो नयाँ यूनिफर्म, जूत्ता अनि सदाभन्दा धेरै नै जेब-खर्च बोकेर स्वतन्त्रता दिवसको कार्यक्रममा भाग लिनुका लागि आ-आफ्ना पाठशाला पुग्छन्।

त्यस दिन बिहान चाँड़ै नै तयार भएर आफ्नो नयाँ यूनिफर्म लगाएर मक्ख पर्दै म घरबाट निस्किएँ। यस वर्ष पोहोर-परारको १५ अगस्टभन्दा धेरै खुशी पनि थिएँ। किनभने, चाइनीज शिल्कको महँगो दामको कमेजको लुगा किनिदिएका थिए। सबै साथीहरूलाई त्यों कमेज देखाए निकै नै नाक घोक्रिने छ मेरो भन्ने धारणा मनमा थियो। किशोरावस्थाको बेला थियो, पन्ध्र वर्षको अबुझ र चञ्चले किशोर थिएँ। स्कूल हिंड़ेपछि बाटोभरि नै आफ्नो कमेज हेर्दै म निकै नै घमण्ड गरिरहें। त्यस दिन भुइँमा खुट्टै थिएन मेरो।

स्कूल पुगें। मेरो कमेज देखेर साथीहरू सबैले आहिस गर्नेछन् भन्ने फ्वाँके विश्वास छँदैथ्यो मेरो मनमा। म स्कूल पुग्दा परिसरमा सबैलाई पंक्तिवद्ध गरी उभ्याइसकिएको रहेछ। म पनि हतारसाथ आफ्नो श्रेणीका विद्यार्थीहरू भएका पंक्तिमा गई उभिएँ।

स्कूलको गेटकै छेउमा ब्याण्डको यूनिफर्ममा उभिएका 'ब्याण्ड मास्टर'-को 'स्कूल! सावधान' अनि 'दाहिने से तेज चल' भन्ने 'वर्ड अफ कमाण्ड'







पाएपछि 'तीनों तीनमें' हामी 'लेफ्ट-राइट' गर्दै स्कूलबाट उकालो लाग्यौं। हाम्रो दाहिने-देब्रेतिर स्कूलकै अध्यापकहरू हाम्रो कदम हेर्दै, गल्ती गर्नेहरूलाई गल्ती सुधार्ने आदेश दिँदै हिँड़िरहनु भएकोथ्यो। यसरी ब्याण्डको मीठो धुन सुन्दै अनि ठूलो ड्रमको 'डङडङ'-सँग कदम मिलाउँदै, मार्च गर्दै हामी बाघधाराको निकट पुगेकाथियौं होला, हठात् कसैले पछिल्तिरबाट मेरो दाहिने पाखुरामा समाएर तान्दै पंक्तिबाट बाहिर निकालिदिँदा मलाई झनक्क रिस उठ्यो। रोड़ामा जुत्ता अल्झिँदा म झण्डै तीन बल्ड्याङ लडें पनि। मलाई कसले तान्यो, मलाई थाहा भएन। किनभने, अत्यन्तै झीनु स्वरमा म मेरो छेउको साथीसँग आफ्नो कमेजको बड़ाइ गर्दै अघि बढ़िरहेको थिएँ।

यसो फर्किएर हेरेको त टीकाराम सर हुनुहुँदोरहेछ मलाई तानेर पंक्तिबाट बाहिर निकाल्ने। म बाहिर त निस्किएँ तर स्वयम्मा अपमानित भएँ जस्तो मलाई लागिरहेकैथ्यो। मेरो अनुहारमा यसको प्रतिक्रिया पोतिएकोथ्यो शायद।

मैले रिससरि टीकाराम सरलाई हेर्दा उहाँले निकै कठोर स्वरमा र शब्दमा मलाई भन्नुभयो- 'तँ स्कूलको मार्च पास्टबाट बाहिर निस्किएर बरू सबै स्कूलको मार्च पास्ट हेर्दैबस् मेलाटारमा।'

आँट पुऱ्याएर मैले उहाँलाई प्रश्न गरें- 'किन सर?'

'उल्टा सोद्धछस् किन भनेर? तँलाई थाहा छैन तेरो शर्टको रङ्ग कस्तो छ?'

उहाँको प्रश्न सुनेर एकपटक त म छक्क परें र सोधें - 'कस्तो छ सर?'

उहाँले भन्नुभयो- 'यूनिफर्मको शर्टसँग मिल्दै नमिल्ने छ। तैंले हेरिनस् र? यसको रङ्ग हल्का पहेंलो छ, सेतो छैन। आजको दिन पनि तिमीहरूले ठीक रङ्गको यूनिफर्म लगाएर आएनौ भने स्कूलको नाम त डुब्छ त।'

घामको उज्यालोमा हेर्दा त्यो कमेजको रङ्ग हल्का पहेंलै देखें मैले पनि जबकि लुगा किनेर ल्याएपछि सिलाएवरि लगाउञ्जेल पनि मलाई सेतै लागेकोथ्यो। र त, आफ्नो महँगो दामको कमेज सम्झिएर ममा घमण्ड आएथ्यो।

त्यस घटनाले गर्दा मैले अपमानित भएको अनुभव मात्र गरिनँ तर म मर्माहत पनि भएँ। मुटुभित्रैबाट यति धेर रिस उठेर आएथ्यो कि टीकाराम सरको टाउकोमा ढुङ्गाले हानेर टाउको फुटाइदिने विचार पनि घरिघरि आएकोले म द्रोही जस्तो भइसकेको थिएँ।

समयको गतिशीलतासँगै त्यस घटनाले दिएको घाउ जाती हुँदैगयो। मैले हायर सेकेण्ड्री परीक्षा उत्तीर्ण गरें अनि स्थानीय महाविद्यालयबाटै परीक्षा उत्तीर्ण गरेपछि मेरा एकजना किन्जांग दोर्जी नाम भएको मित्रको आग्रहले गर्दा सिक्किम सरकारको शिक्षा विभागमा शिक्षक पदका निम्ति अन्तर्वार्ता दिएँ अनि दक्षिण सिक्किमको तेमी-तार्कूमा अवस्थित जुनियर हाई-स्कूलमा नियुक्त भएर आफ्नो जागिरे जीवनको शुभारम्भ गरें। त्यहाँबाट शिक्षा विभागकै प्रशासनिक प्रभागमा सरूवा भएपछि सह-शिक्षा अधिकारीको पदमा प्रतिनियुक्ति भएको थिएँ। अन्तमा त्यसै प्रभागमा शिक्षा उपनिर्देशकको पदमा पुगेपछि २००२ सालमा







सेवा निवृत्त भएँ।

आज पनि स्कूल यूनिफर्मको त्यो कमेजसँग जोडिएको अप्रिय घटनाको मलाई सम्झना हुँदा, झझल्को आउँदा लाग्छ कि उक्त घटनाले गर्दा आफ्नो शिक्षण कालमा मलाई मेरा विद्यार्थीहरूसँग मैले कस्तो आचार व्यवहार राख्नुपर्ने हो भन्ने मार्ग सुस्पष्ट गरिदियो अनि कोमल मस्तिष्क अत्यन्तै चाँड़ो प्रतिक्रियाशील बन्दछ तथा द्रोही भाव जागृत हुँदछ भन्ने यथार्थ बुझ्न मलाई गाहो भएन।

यसै सन्दर्भमा मलाई के भन्नु मन लागेको छ भने विद्यार्थीहरूले पनि आफ्नो अध्ययनप्रति सजग रहनु बाहेक विद्यालयले निर्दिष्ट गरेको अनुशासनका विभिन्न पक्षहरूको पालन नियमपूर्वक अनि नबिराई गर्नुपर्छ। शिक्षकको पनि विद्यार्थीप्रतिको व्यवहार निष्पक्ष,कोमल अनि उनीहरूको मानसिक वयानुरूप भइदिए शिक्षक-शिक्षार्थीमाझ उत्पन्न हुने द्वेष र वैर-भावले शिक्षण-पठनको मार्गमा कदाचित् बाधा उत्पन्न गर्नेछैन। शिक्षकबाट अवहेलित र प्रताड़ित भएका विद्यार्थीहरूको हृदयमा सम्बन्धित शिक्षकप्रति घृणा अनि अध्ययनप्रति वितृष्णाको सृजना पनि गर्नसक्छ।□







# कुमुदिनी विद्याश्रमलाई श्रद्धा सुमन


दीपक कुमार गजमेर

परिचय● दीपक कुमार गजमेर
जन्म● तोपखाना कालेबुङ २ मार्च १९५४।
क) १९६२ देखि १९७१ सम्म कुमुदिनी विद्याश्रममा अध्ययन।
ख) १९७२-मा उच्चत्तर माध्यमिक (कला) दोस्रो दर्जामा उत्तीर्ण।
ग) १९७८ देखि १९८० सम्म कालेबुङ महाविद्यालय, वाणिज्य विभाग (प्रातःकाल)-मा अध्ययन अनि बी॰ कम॰ डिग्री प्राप्त।
घ) हालमा **Indian Audit & Accounts Department** मा **Deputy Accountant General** को पदमा **O/o the Accountant General (A&E), West Bengal Buildings Kolkata-700 001** मा कार्यरत्।

कुमुदिनी विद्याश्रम
श्रद्धाको फूलहरू चढ़ाउँछु -तिमीलाई
शिक्षाको ज्योति पाएँ - तिमीबाट
चरित्रं हि बलम् को शिक्षा पाएँ - तिमीबाट।

मेरो जीवन उज्ज्वल र सफल बनाई दियौ -तिमीले
सङ्घर्षमय जीवनमा लड़ने सिपाही बनायौ- तिमीले
कुन शब्दमा वर्णन गँरू- तिम्रो योगदानको
छैन मसित कुनै उपयुक्त शब्द पनि।

कुमुदिनी- मेरो अतीत थियौ तिमी
कुमुदिनी -मेरो वर्त्तमान हौ तिमी
कुमुदिनी- मेरो भविष्य हौ तिमी
मेरो जीवन समर्पित तिमीलाई।

कुमुदिनी- तिमी धन्य
कुमुदिनी- तिमी महान्
अर्को जीवनमा पनि तिम्रै विद्या-मन्दिरमा
शिक्षा ग्रहण गर्ने सुयोग मिलोस् मलाई
यही मेरो कामना कुमुदिनी विद्याश्रम प्रति
श्रद्धाका फूलहरू चढ़ाई।।
❐







# ज्ञान सरिता छल्किरहोस्


टी॰ एन॰ सुवेदी

नाम● टी॰ एन॰ सुवेदी
पूरा नाम● तारानाथ सुवेदी शर्मा
जन्ममिति● १ दिसम्बर १९४६
जन्मथलो● कालेबुङ नगर
शिक्षा● पुरानो उच्चमाध्यमिक (१९६६),शिक्षण -प्रशिक्षण प्राप्त (बी॰ टी॰)
रचना प्रकाशित भएको पत्र-पत्रिका● हिमालचुली, सुनचरी, हिमालय दर्पण, साहित्य सङ्केत, चासो, उदय, प्रेरणा, नवपल्लव, कुमुदिनी र अन्यान्य।
सम्पादन● गोर्खा सम्वाद, चासो, शिक्षक परिवेश, शिक्षक दीप, खेल-दर्पण, प्रयास एवं अलगड़ा स्मारिका।

संसारनै हाम्रो कर्मभूमि हो, चित्त यसैमा रमिरहोस्।
पौरख पुष्ट दुवै भुजाको नित्य निरन्तर फड़किरहोस्।।
मानव हितमा सदा अगाड़ि पाउ दहिलो बढ़िरहोस्
लक्ष्य शिखरमा पुग्न सकौं अब चाहे आँधि उड़िरहोस्।

जाति समाज र विद्या-प्रेमको ज्योति दिलमा बलिरहोस्।
मातृभूमिका चरम् सेवामा जीवन अर्पण भइरहोस्।।
अत्याचारको घोर विरोधमा जिन्दगी सारा सड़िरहोस्।
शोषण ज्वाला दनदन बल्दो निभाउन रक्त बगिरहोस्।।







सत्य अहिंसा प्रेम शान्तिको झण्डा उँचा उठिरहोस्।
दीन-दुःखी र असहाय जनमा दयाको भावना रहिरहोस्।।
न्याय-नीति र धर्म-रक्षामा कलमको तोप दन्किरहोस्।
विश्वमा शिर उचाली बाँच्न छाती यो हाम्रो फुकिरहोस्।।

क्रोध र ईर्ष्या वैमनस्यको बाँध विराट टुटिरहोस्।
कठोर पाषाण छाती अरिको तातो लहूले भिजिरहोस्।।
स्वार्थ त्याग र कर्म- निष्ठाको राँको अखण्ड जलिरहोस्।
स्वतन्त्रताको स्वाद छ रसमय पिउनु यसलाई परिरहोस्।।

आत्मा सुप्त यो उठिरहोस्, उत्साह उमङ्ग खन्किरहोस्।
जीवन हाम्रो अमूल्य चोला परोपकारमा नै बाँचिरहोस्।।
मृत्यु-धुँवामा चिता जलेको ज्ञान सरिता छल्किरहोस्।
गुरु भक्ति र ईश चरणमा मस्तक हरदम झुकिरहोस्।।



स्मारिका



# ध्वाँसे अनुहार




रचनाकारको परिचय
नाम● राज के॰ श्रेष्ठ
जन्म ●जनवरी १९४८ डुवर्समा
पेशा● सिक्किम मिल्क युनियनबाट सेवा निवृत्त
सम्प्रति● हिमालय फार्मेसी इन्स्टीच्यूट, माझीटार (रम्फू)-मा सेवारत
कृतिहरू-● हामी दुइका मुक्त (मुक्त सङ्ग्रह)● यात्राक्रम (कविता सङ्ग्रह)
● जीवनी-क) महात्मा गान्धी ख) डा॰ पारसमणि प्रधान ग)शिव कुमार राई
घ) डा॰ राधाकृष्णन्● निबन्ध सङ्ग्रह ●प्रकाशनोन्मुख- तेन्जिङ शेर्पा, हाम्रा युग पुरुष ●जीवनी- डा॰ ए॰ पी॰ जे॰ अब्दुल कलाम

---

मान्छेले नचिनेको मान्छेको जात
मान्छे नै हो भन्ने नबुझेको
खोजिहिँड्छन् अनुहारमा मान्छे
दँवाइहिँड्छन् अनुहारमा मान्छे
सीयो धागो, कलम
हातमा बोकेर खोजेजस्तो
चश्मा निधारमा अड्याएर
धुइँधुइ खोजेजस्तो
विचारहरू मन मस्तिष्कको हातमा समाएर
निधारमा अड्याएर खोज्छौं पाखामा
मान्छे र
मान्छेको जात।
किन निस्किन नसकेको खोह
विचारको गुफाबाट र
पस्न नसकेको मानवताको जङ्गलमा
तप गर्न बुद्धले जस्तो
मान्छे चिन्न
मानवता जात्र र
जात बुझ्न।
किन दुःख गरेको खोज
गाउँ-गाउँ
बस्ती-बस्ती
बजार र शहरभित्र
धूत समाउने जाँगर चलाएर
अन्धा विश्वासी भए
किन भेट्टाउन नसकेको?
सायद आफ्नै मनको घरभित्र
अन्धकार भएकोले हो कि?
थप्नुपर्छ तेल सोचाइको
बाल्नुपर्छ बत्ती विचारको
झार्नुपर्छ ऐंजेरू सङ्कुचितताको
पार्नुपर्छ उज्यालो झलमल्ल घर विचारको
धुनुपर्छ मयल कुत्सित विचारको
अनि देखिन्छ छर्लङ्ग
मानव-जातिको
ध्वाँसे अनुहार।❑







# झझल्कोहरू

नाम● डा॰ इस्माएल मंग्राती
कुमुदिनी भर्ना भएको श्रेणी ● प्रथम श्रेणीदेखि
माध्यमिक परीक्षा उत्तीर्ण ● सन् १९८२
एम॰ भी॰ एस॰ सी॰ ● सन् १९९२ (विधानचन्द्र कृषि विश्वविद्यालय, नदियाबाट)
वर्तमान पेशा● ए॰ एच॰ एण्ड भी॰ एस॰ पश्चिम बङ्ग अधीनस्थ पशु चिकित्सा अधिकारी, पश्चिम बङ्ग पशु-चिकित्सा सेवा कार्यालय, कालेबुङ।


डा॰ इस्माएल मंग्राती

सुवासले युक्त छन् फूल कहीं
जसलाई लिन्छन् शिरमा चढ़ाई
सुपुत्रको हुन्छन् सदैव जान
जहाँ गए तापनि नित्य मान।
*(कविताः सुपुत्र र कुपुत्र)*

हो, उक्त चार पंक्ति मनन गरेर नै शिक्षाको मलिलो अनि फराकिलो फूलबारी कुमुदिनी विद्याश्रममा आधिकारिक रूपमा प्रवेश पाएको हिज नै जस्तो लाग्छ। कञ्चनजङ्घा झैं अग्लो र चौड़ा भएको थियो त्यो सानो छात्ती, त्यति बेला। कुमुदिनी विद्याश्रमको प्राथमिक शाखामा औपचारिक प्रवेश परीक्षाको निम्ति कुपु-कुपु अलैंची खाँदै गम्भीर मुद्रामा बसेकी सोङ्पाङ्गे दिदीअघि सीधा खड़ा भएर यहीं कविता पाठ गरेपछि राष्ट्रीय स्वयम् सेवक झैं खाकी-सेतो स्कूलको पोशाकको थप हकदार भएको थिएँ। स्कूलको परिसर परिवेश, शिक्षक-शिक्षिका, कर्मचारीगण अनि सबै सहपाठीहरू मेरो निम्ति नौला र अपरिचित थिए भने उनीहरूको निम्ति म। कति साथीहरू हेर्दै गोरा, सफा, बलिया एवं चिटिक्क सजिएका अनि धेरै म जस्तै खिनौटे, सिँगाने र खालीखुट्टे। बाहिरी रङ्गरूप बेग्ला-बेग्लै देखिए पनि मन, मस्तिष्क अनि स्वभाव सबैको स्वच्छ, सोझो र बालकपनको अज्ञात उत्सुकताले भरिएको, भनौ एउटै गोठ अनि बगालका भेड़ाहरू थियौं, हामी।

चर्को घाम या त पानीझरी केही वास्तै नगरी कागज, भोगटे वा छालाको गोली नडै उकिने गरी, ताना-ताना गर्दै बलौटे टारहरूमा भोक-भोकै खेल्ने गर्थ्यौं। पसीना र धूला-मैलाहरू तल साधु-धारामा धोई टोपल्ने दैनिक कार्य सिद्धाए पछि हूल बाँधेर आ-आफ्ना डेरा फर्कन्थ्यौं।

अब, घाम-पानी, घाम-पानी
स्यालको बिहा
कुकुर जन्ती

बिरालो बाहुन -गाउँदा-गाउँदै, ढुङ्गा मीठाई र पाला मीठाईको गुलियो स्वाद लिँदा-लिँदै, अशोक सरको हार्मोनियमको धुन र भजन पाठ गर्दा-गर्दै, जिन्दावाद-मुर्दावादका नाराहरू सुन्दा-सुन्दै अनि आदर्शवादी दिदीहरूको गहकिलो शिक्षा-







दीक्षाको प्रवाहमा समय बगेको पत्तो भएन। प्राथमिक विभागदेखि उत्तीर्ण भएर आधुनिक ढाँचामा बनिएको कुमुदिनी विद्याश्रमको मूल कक्षा-घरमा प्रन्नोति हुँदा हामीहरू झन् रमाएका थियौं।तब ध्वनि बक्स भएको ठूल्ठूलो कक्षा, नयाँ टेबल-चौकी, चौड़ादार ब्ल्याक् बोर्ड, विशाल छात्रावास, स्तरीय प्रयोगशाला, सङ्ग्रहालय, पुस्तकालय, क्राफ्ट रूम, प्रधानाध्यपक स्व॰ सी॰ बी॰ राणासँगै प्रायः युवा सर-गुरुमा अनि कतिपय नयाँ साथीहरूसँग प्रथम परिचय र सम्बन्ध जोड़ियो। आत्माभिमान अझ बढ़यो। एउटै श्रेणीका छात्रहरू विभिन्न हाउसहरू (**गान्धी, नेहरू, राधाकृष्ण, रवीद्र, मालवीय, दोर्जी, भानु र डम्बर**)-मा बाँड़ियौं। एस॰ टी॰ दोर्जी टावर घड़ीको काँटासँग हाम्रो उठ्-बस् हुनथाल्यो।

त्यसताक कुमुदिनी विद्याश्रमले प्रायः सबै क्षेत्रमा प्रसिद्धि कमाइ सकेको थियो। सत्तरीको दशकतिर 'सन्त अगस्टिन स्कूल'-ले आफ्नो स्कूलको वार्षिक खेलकूद दिवसको अवसरमा अन्तर विद्यालय ***म्याराथन दौड़***को आयोजन गर्ने गर्थ्यो। कुमुदिनी विद्याश्रमका लामो दौड़मा भाग लिने फूर्तिला छात्रहरूले प्रतियोगितामा सधैं जित्ने परम्परा जस्तै थियो। स्मरणमा आलो रहेका ती जण्डा म्यारानथनरहरू हुन्- स्व॰ हरि थापा, नर बहादुर छेत्री, मणि खवास, तारा सुन्दास, लेमसिङ लेप्चा, बसन्त राई, मंगलसिंह राई, मणिकुमार छेत्री, स्व॰ प्रदीप गुप्त (झ्यामु), प्रसाद राई अनि साथीहरू। के॰ एच॰ एस॰ अंकित सेता गञ्जी लगाएका यी छात्रहरू स्वाँ-स्वाँ गर्दै पाइलट गाड़ीको ठीक पछिपछि दगुर्दा हामीहरू उफ्रँदै , नाँच्दै, थपड़ी बजाउँदै अनि प्रोत्साहनका दुइ शब्द भन्दै छात्रहरूको मनोबल अझ बढ़ाएको हिज जस्तै लाग्छ। साँच्चै हर्षप्रद थिए ती अमूल्य क्षणहरू।

त्यस्तै अब्बल दर्जाको थियो कुमुदिनी विद्याश्रमको भलिबल टोली। उत्तम तामाङ, केशवचन्द्र प्रधान, केशव खवास, मिलन ओझा, थुप्देन भोटिया, जीवन प्रधान, मोहन कुमाई, सुवास शर्मा अनि साथीहरूले प्रतिनिधित्व गरेको टोलीले दार्जीलिङ्मा विजय प्राप्त गरेको हो। 'हार्ने गोरुको छेर्ने बानी' भने झैं दार्जीलिङ्का हरुवाहरूले धम्काएको पनि सुन्नपर्‍यो। कालेबुङ्को मेलाटारम आयोजित हुने अन्तर विद्यालय खेलकूद प्रतियोगितामा पोलभल्ट् जस्तो कठीन खेलमा लेखनाथ शर्मालै झैं आकाश छुने उँचाइ फुत्त नाँग्ने कोही थिएन। त्यस्तै हाई-जम्प्मा कुमुदिनी विद्याश्रमकै प्रेम राईले पानीबाट माछा उफ्रे झैं आफूभन्दा अग्लो बार एकै फड्कोमा पार गर्दा धेरै चर्चाको विषय बनेको थियो।

स्कूलको मिनी फूटबल टीम लगातार ४-५ वर्ष अन्तर विद्यालय विजेता हुनसकेको थियो भने सिनियर टीमको प्रदर्शन त्यति राम्रो थिएन। वर्त्तमानमा जस्तो त्यतिबेला पनि एसयूएमआइ-सँग नै गहिरो प्रतिद्वन्द्व हुन्थ्यो। तिनै फुटबलरहरू कालेबुङ्का प्रसिद्ध खेलाड़ी बन्न पुगे जस्तैः गौलन लेप्चा, आदित्य राई, दिनेश रोका, सपन खड़का, योगेन्द्र खड़का, राजीव गुप्त, निर्मल राई, युवराज दाहाल आदि।

त्यतिखेर अन्तर विद्यालय तर्क प्रतियोगिता धुमधामसँग पुरानो टाउन हलमा हुन्थ्यो। कुमुदिनी विद्याश्रमका छात्रहरू कहिल्यै दोस्रो स्थानमा आएनन्। यसरीनै नाट्यकला अनि गीत-सङ्गीतको क्षेत्रमा पनि त्यत्तिकै प्रतिभाशली विद्यार्थीहरू थिए। फुर्बा वाङ्दी शेर्पा, दिनेश रोका र युवराज दाहालको हास्य-व्यांग्य







नाटकहरू धर्म हलको मञ्चमा मात्र सीमित नरहेर देश-विदेशको सीमा पार गरेका थिए। यी बाहेक धर्म हलको मञ्चबाट फस्टाएर हाल कालेबुङे नाटक क्षेत्रमा ख्यातिार्जन गरेकाहरूमा प्रकाश छेत्री, मणि भुजेल, मणि छेत्री, किरण प्रधान आदिको नाम लिनसकिन्छ।

गीत-सङ्गीतको विभिन्न क्षेत्रमा पनि त्यसताकका छात्रहरू पछि थिएनन्। धर्म हलको सानो मञ्चदेखि नेपाली सङ्गीतको फराकिलो आकाशमा चम्कनसकेका केही सङ्गीतकार, गायक अनि गीतकारहरू हुन् मधुसुदन लामा, राजेन घिमिरे, मिलन राई, स्व° सोङराब्देन फनिङ, दावा प्राखीन, नोएल लेप्चा, दिलीप भुजेल, विकास राई, सञ्जीव राई आदि।

अब स्कूलको क्रिकलाप मध्ये **स्कूल डे** अथवा २४ मईको एउटा छुट्टै महत्त्व र रोमाञ्चक सम्बन्ध छ। ठटेउली गर्दै **'सिङ्गड़ा र बुनिया खाने दिन'** भन्थ्यौं सबैले। समस्त कालेबुङवासीले यो दिनलाई एउटा पर्वको रूपमा लिनेगर्थे। उक्त दिनको विविध सांस्कृतिक कार्यक्रम दुलही झैं सजिएको धर्म हलमै गरिने प्रचलन थियो अनि केही मनोरञ्जनात्मक खेलहरू विभिन्न कक्षाहरूमा राखिएको हुन्थ्यो। सुव्यवस्थित ढङ्गमा परिचालित गरिन्थ्यो सबै कार्यक्रमहरू। गुरु- गुरुमा, कर्मचारी, छात्र-छात्राहरूको सामूहिक उतरदायित्व अनि आतुरीले परिवेशमा अझ गर्मी थपिन्थ्यो। अभिभावक, गण्यमाण्य व्यक्ति, अन्य स्कूलका छात्र-छात्रा, रौसे केटा-केटीहरूको भीड़ले धर्म-हल अनि स्कूलको परिसर डम्म ढाकेकोले कुमुदिनीका विद्यार्थीहरू चाहिं बाहिर अलपत्र परेर बस्ने बाध्यतासम्म पनि हुन्थ्यो। सांस्कृतिक कार्यक्रमको प्रस्तुतिले स्रोताहरू सधैं मक्ख पर्थे। विद्यार्थीहरूका निमित्त कला फस्टाउने एउटा पुज्यनीय मञ्च थियो धर्म हल। वार्षिक खेलकूद लगायत शिक्षामा श्रेष्ठता लिएका विद्यार्थीहरूको पारितोषिक वितरण पनि २४ मईको दिन नै गरिन्थ्यो। बाहिरबाट आएका नाटक टोलीको नाटक मञ्चन प्रायः यही धर्म हलमै हुन्थ्यो। रोमाञ्चित ती दिनहरू भुल्न कहाँ सकिंदोरहेछ, झझल्को आइबस्छ।

हिज-आजभन्दा सत्तर-अस्सीको दशकको १५ अगस्ट तुलनात्मक दृष्टिकोणले अझ भव्य, रोचक र प्रभावशाली हुन्थ्यो। दार्जीलिङ जिल्ला बाहेक सिक्किम, भुटान अनि नेपालका मानिसहरू कालेबुङमा ओइरिन्थे, खुट्टा राख्ने ठाउँ हुदैनथ्यो मेलाटारमा। कुमुदिनी विद्याश्रमको प्रस्तुति अनि प्रदर्शन सधैं उत्कृष्ट हुने गर्थ्यो। थुप्रै सांस्कृतिक झाँकीहरू बाहेक डंफे नृत्य, खुकुरी नृत्य अनि झाँक्री नृत्यहरूले धेरै प्रसिद्धि कमाएका थिए त्यसताक। एन° सी° सी° टोली त्यस्तै उच्चस्तरीय थियो। भातको माड़मा डुबाएको अनि तोसकमुनि थिचेर ईस्त्री गरेको खाकी-सेतो वर्दी लगाएर १५ अगस्टमा परेड गर्नैपर्ने उत्कट इच्छा राख्थ्यौं भने काँक्रा र बन रोटी खाएरै उत्सवको आनन्द उपभोग गर्थ्यौं। ती क्षणहरूका स्मरण आज पनि उत्तिकै मीठो छ।

मेलाटारमा आयोजित हुने कुमुदिनी विद्याश्रमको वार्षिक खेलकूद कालेबुङवासीको निम्ति एउटा थप आकर्षण थियो त्यतिखेर। प्रायः सबै मान्यताप्राप्त खेलकूदहरूमा छात्र-छात्राहरू माझ होड़बाजी हुन्थ्यो भने १०० मि° हर्डल दौड़ मुख्य आकर्षण थियो। मन्टेशरीदेखि दशौं श्रेणीका छात्र-छात्राहरूलाई तिनीहरूको श्रेणी, उचाइ र वजनको







आधारमा विभिन्न डिभिजनमा छुट्टाइन्थ्योअनि प्रतियोगिता शुरु हुन्थ्यो। छात्र-छात्राले प्राप्त गरेका व्यक्तिगत स्थान माथिनै निर्भर गरेर कुन हाउसले के दर्जा पाउने सो तय गरिन्थ्यो। कतिपय खुल्ला इभेन्टमा अन्तर विद्यालय प्रतियोगिता मच्चिन्थ्यो। खेलकूदमा लाग्ने समानहरूको ओसार-पोसार गर्ने छात्र-छात्राहरूलाई दश अङ्क थपिदिने प्रबन्ध पनि थियो। झझल्कोको लहर मनमा आलो नै छ!

एउटा प्रसिद्ध शैक्षिक प्रतिष्ठान भएकोले शिक्षाको क्षेत्रमा गुणात्मक अनि सकारात्मक उन्नति निरन्तर भयो। शिक्षक-शिक्षिकाहरूलाई द्रोणाचार्यको स्थानमा प्रत्येकलें नै राखेका थिए। आदर, सम्मान अनि गुरु-शिष्यको सम्बन्धलाई न्यानो राखेर गुरु दक्षिणा दिने अनुकरणीय कार्य गरिथ्यो।

अनि

*"The Woods are lovely, dark and deep,*
*But I've promises to keep.*
*And miles to go before I Sleep*
*And miles to go before I Sleep."*

**लक्ष्यलाई हासिल गर्नु हो भने सधैं जागो बसेर जीवनमा आइपर्ने समस्याहरूको निरन्तर सामना गर्नुपर्छ, बुझिस् चाउरेहरू,** - एस॰ के॰ सरले उक्त कविता टिप्पणी गरेको हिज जस्तै लाग्छ।

टी॰ बी॰ राई सरले निम्नलिखित कविता पढ़ाउँदा-

**मै मिरिमिच्चे म्याँ-म्याँ बुरुक्क**
**कान छ मेरो फट-फट-फट**
**खुट्टा छ मेरो खट्-खट्-खट्,**
**उठेर हिंड़्छु जराक-जुरुक,**
**मै मिरिमिच्चे म्याँ-म्याँ बुरुक्क।**

बाख्राको अनुकरण गर्दै हामी मरिमरि हाँसेको झझल्को यी आँखामा आज पनि आउँछ।

स्व॰ भरत थापा सरको अङ्कगणित पिरियडमा एकदेखि बीससम्मको गुणा मुखस्त राख्नु खूबै अनिवार्य। अचानक १६x६ भनेर प्रश्न गर्दा झट्टा उत्तर नदिए दुइ हात थाप्दा हुन्थ्यो। बितेर जानु भयो सर तर वहाँको झझल्को आइबस्छ।

**'ऐ! के खेलाउँदैछस् हैं? हिसाब त आलु जस्तो क्वाप्-क्वाप् खा न,'**-बी॰ बी॰ ब्लोन सरको नाके स्वर र व्यंग्यात्मक झटारो भुल्नै सकिन्न।

**'ऐ, बुझ्यो ' रे, कप्तान को छ'रे, उसलाई एक लात देन'रे,'** स्व॰ तिवारी सरले आफ्नो प्रादेशिक भाषा र नेपाली भाषालाई मिसाएर कोक्टेल भाषामा भौतिक विज्ञान पढ़ाएको आँखामा झल्झली छ।

नेपाली सामाजिक परिस्थितिलाई आधार एवं चित्रण गरेको कथा 'परालको आगो' मा चामे र गौंथलीमाझको सम्वादलाई आफै भावुक भएर प्रतिप्रदान गरिदिने श्रद्धेय गुरु पी॰ एल॰ सुब्बालाई कसले भुल्नसक्छ र।

स्व॰ फुप छिरिङ सरले ह्याडोभरमै फुटबल खेलाएको आजै जस्तो लाग्छ। आर॰ ए॰ प्रसाद सरले सानो स्वरमा प्रश्न सोद्धा नसुनेर अन्योलमा परेको अझै आँखामा छ।

स्व॰ पाण्डे सरको मौनता अनि गम्भीरतालाई बुझ्नै गाह्रो, बी॰ सी॰ सुब्बा सरले 'Glimpses of Indian History'पढ़ाउँदा क्लासको प्रायः केटाहरू किताबमा मग्न ध्यान दिए जस्तो गरी मस्त सुतेको, स्व॰ हरि सरको पिरियडमा अङ्ग्रेजी-नेपाली शब्दकोश नबोक्नेले डस्टर र चकको झटारो भेटेको, भूगोल क्लासमा डेलो डाँड़ाको भौगोलिक नाउँ **देवला हिल**







भनेर अग्रवाल सरले भन्दा हामी सबै निःशब्द बसेको, वर्क एड्डुकेशनमा पी° एल° सर र एच° बी° जोन सरले लिफा, बाँसको झाड्डु, काठको फिट, तारको पेटी इत्यादि बनाउनु सिकाएका, लामा सरले 'हर्कुलस अनि एट्लास्'-को कथा पूरै छ महिना पढ़ाएको, पासाङ सरको कठीन अङ्कगणित टेस्टमा एकै लहरमा बस्ने सबैले शून्य पाएका, **मिली मिसी कोरी काज, हारी-जीति नोइ लाज** भन्दै शाहा सरले बङ्गाली सिकाएको,कुमार सरको हँसेउली-ठटेउली, गौतम सरको हिन्दी पाठ, नन्दिता गुरुमाको ज्ञान-विज्ञान, प्रेम गुरुमाको ह्याण्ड राइटिङ्ग क्लास, परेवाको जोड़ी जस्तो जे° जे° पी° सर अनि केसाङ गुरुमा र स्व° देवान सरको बहुमूल्य पुस्तकालय इत्यादि। यी सबै सबै भुल्न चाहेर पनि बिर्सिन कहाँ सकिन्छ र?

त्यस्तै बाघधाराको चिसो-मीठो पानी, स्कूल क्याण्टीनको बटारे, सत्य भैयाको काँक्रा र बदमको अचार, फत्तफत्ते बाजेको अम्बक, आरु, नस्पाती, मललैंडो चोर्दा मटेंग्राले भेटेको, मिसेस् किंगको बारीमा चिनीयाँ आरु चोरेर भाग्दा खुट्टा सड्केको, मिनी फुटबल टोलीले फाइनल जित्दा स्व° भरत सरले सर्वप्रथम डोसा खुवाएको (अरू बेला बाघधाराको पानीमा नै सन्तुष्ट हुनपर्थ्यो), स्कूलको सीनियर टोलीले सक्दो परिश्रम गर्दा-गर्दै सधैं एसयूएमआइ-सँग हार्नुपर्दाको खिन्न मन, चारैपट्टि फाटेको फुटबल बूट र गोली मेहनतसँग सिलाईदिने मोची भैया, स्कूल गेट अघि लश्करै बसेको रोटीवाल भैयाहरू, केटीहरूले जवाबी हमलामा 'चपरासी'भन्दा लाजले भुतुक्क भएको ... र त्यस्ता थुप्रै झझल्कोहरू बेला-बेला पुराना साथीहरू भेला भएर सम्झँदा फेरि आलो हुन्छन् ती क्षणहरू, दिनहरू अनि वर्षहरू। समयलाई छेकेर भूतकालमा फर्काउनु सक्ने भए पनि फेरि त्यही स्कूलकै सुनौला दिनहरूमा फर्किने थिएँ। तर, मानिसले सोचेको,सम्झेको र चिताएको सबै हुने भए ईश्वरप्रति मान्छेको आस्थाको के मूल्य?

कुमुदिनी विद्याश्रम शिक्षाको त्यो तीर्थस्थान थियो जहाँ टिस्टा वारि-पारिका, देशभित्र बाहिरका, विविध जात-जाति, धर्म अनि भाषिकका छात्र-छात्राहरूले **कुमुदिनी विद्याश्रम** अंकित फराकिलो मूल ढोकाभित्रको माटोमा पाइला टेकेपछि स्कूलको आदर्श वाक्य **चरित्रं हि बलम्**-लाई साकार गर्दै बाँच्ने प्रेरणा लिन्थे। आत्मसम्मान,आत्मविश्वास अनि अनुशासन प्रत्येक छात्र-छात्राको हृदयमा व्याप्त थियो। भिन्नता कतै थिएन बरू आत्मीयताको सुवासना पाइन्थ्यो त्यहाँ।

खेतमा लगन र परिश्रमको पसीना बगाउँदा-बगाउँदै रोपेको धानको बिरुवा सबै धानकै बोट हुन्छन् भन्ने पनि छैन, त्यहाँ सामाको बोट पनि बड़ेको हुन्छ, हुर्केको हुन्छ। घाम-छाँया जस्तो जीवनमा पनि सफलता-असफलता चलिरहन्छ नै,सफल हुनु वा नहुनु ईश्वरकै देन हो। कुमुदिनी विद्याश्रमबाट फैलिएका बीऊहरू पनि धेरै फूले-फले अनि थोरै फूल्न-फल्न सकेनन् होला। तर चरित्रकै बलमा मान्छेले अनन्त मान-सम्मान कमाउँछ। चरित्रवान व्यक्तिहरू साधारण हुँदैनन्, त्यस्ता मान्छेहरू मरेरै पनि बाँचिरहेका हुन्छन्। शायद, स्कूलको आदर्श वाक्यले कुमुदिनी विद्याश्रमको आँगनबाट विदा भएका प्रत्येकलाई यही सन्देश बाँड़्न चाहेको हो -निश्चय। अतीतको झझल्कोदेखि ब्यूँझेर यथार्थमा क्रमशः फर्कन्छु। रमाइला दिनहरू सम्झेर हर्षविह्वल हुन्छु। ❐







# मेरो प्यारो कुमुदिनी होम्स्

पूरा नाम ●देवीप्रसाद भण्डारी
जन्म-तिथि ● ७ अगस्त १९४९
जन्मथलो ●गैरी गाउँ, बमबस्ती, कालेबुङ
शिक्षा ●स्नातक (बी॰ ए॰)
प्रकाशित कृति ●यही बाटो भएर (उपन्यास १९८०), किनारा- उपन्यास (१९८२), शब्दहीन- कविता सङ्ग्रह (१९८६), अभिषेक-कविता सङ्ग्रह (१९८६), कथा आफ्नै- उपन्यास (२००५)।
पेशा ●हाल गान्तोकको सेन्ट्रल ब्याकमा उप-प्रबन्धक।


■देव भण्डारी

गाउँको पाठशालामा पाँचौ कक्षा उत्तीर्ण भएपछि म कुमुदिनी हेम्समा छैटौं श्रेणीमा भर्ना भएँ। सड़कबाट स्कूल पस्ने ठाउँमा एउटा भव्य गेट। सिरानमै कमलको फूल, पुस्तक, पहाड़ अंकित **चरित्रं हि बलम्** अर्थात् चरित्र नै बल हो। सबै छात्रहरूले ब्याज लगाउनै पर्ने अनि स्कूल ब्याजमा पनि उही आदर्श वाक्य लेखिएको हुन्थ्यो **चरित्रं हि बलम्।**

पहिलो दिन श्रेणीमा बस्दा म औधि नै डराएको थिएँ। गुरुहरूले पढ़ाउँदा मन कहाँ-कहाँ चाहारिरहेका हुन्थ्यो। गाउँको उन्मुक्त वातावरणबाट आएको केटो, अनुशासन भन्ने कुरा नसुनेको। पढ़नुभन्दा खेल्नु, उफ्रिनु, कुद्नु, चिच्याउनु धेर गेरको। सर्वथा भिन्न वातावरणमा आइपुगेको थिएँ। यहाँ गुरुहरूले पढ़ाउँदा म ती निस्फिक्री दिनहरू सम्झिरहेको हुन्थें तर यहाँ पढ़ाइमा ध्यान दिएको, नदिएको गुरुहरूले अघि नै थाहा पाउने।

विद्यालयको त्यो अग्लो घण्टा घरमा जड़िएको घड़ीले टङ्टङ् घण्टी बजाएर आवाज दिन्थ्यो। त्यो घड़ीको आवाज पारितिरका गाउँहरूमा पनि सुनिन्थ्यो। र गाउँलेहरूले यति बज्यो भनेर थाहा पाउँथे। घण्टीको टङ्टङ् आवाजले वातावरण नै सजीव बनाइदिन्थ्यो। पढ़न साह्रो र मन भयाक्रान्त भए पनि म गर्व अनुभव गर्थे, यस्तो नामी र भव्य विद्यालयमा अध्ययन गर्ने अवसर पाएकोमा।

सोमबारको दिन स्कूलको हल, धर्महलमा एसेम्बली हुन्थ्यो। राष्ट्रीय गीत गाइसकेपछि प्रधानाध्यापक श्री टीकाराम शर्माले विद्यार्थीहरूलाई सम्बोधन गर्नुहुन्थ्यो। उहाँले आफ्नो सम्बोधनमा विशेष गरी अनुशासन, चरित्र निर्माण, कठीन परिश्रम र निरन्तर अध्ययन इत्यादि विषयहरूमाथि जोड़







दिनुहुन्थ्यो। विद्यार्थीहरूबाट हुनसक्ने ससाना भूल-भ्रान्तिहरूमा पनि उहाँले ध्यान दिनुहुन्थ्यो। स्कूल ड्रेस इस्त्री लाएर चटक्क पारेको हुनुपर्ने, जुत्तामा पालिस लाएर टल्किएको हुनुपर्ने, सधैं नम्र अनि सुसंस्कृत ढङ्गमा बोल्नुपर्ने, बेलुका स्कूल छुट्टी भएर निस्किँदा तँछाड़-मछाड़ होइन अनुशासित ढङ्गले निस्कनुपर्ने असभ्य भाषा त बोल्नै नहुने, यस्तो अनुशासन बसाइदिनुभएको थियो प्रधानाध्यापकले। कागजका टुक्राहरू जताततै नफ्याँक्नू, कतै कागजका टुक्राहरू फ्याँकिएको पाइए लगेर डस्टबिनमा हालिदिनू, सधैं कार्यशील रहनू, यस्ता कुराहरू सुन्थ्यौं हामी उहाँका मुखारविन्दबाट। बाल्यकालदेखि आज जीवनको उत्तरार्द्धमा आइपुग्दा पनि उहाँका निर्देशहरू मानसपटमा यथावत् छन्। बाल्यकालमा मनमा परेका यी छापहरूले आजसम्म उहाँको आदर्श, अनुशासन अनि व्यक्तित्वको अमिट छाप परेको छ उहाँका छात्रहरूमा।

हामी आज पनि बूढ़ापाकाहरूबाट सुन्ने गर्छौं 'आजको कुमुदिनी होम्स पहिला बजारमा दुइ कोठा मात्र भएको काठको सानो डेरा जस्तो मात्र थियो अरे। त्यसलाई टाउन स्कूल भन्थे अरे। त्यसैलाई आफ्नो लगनशीलता अनि विद्यानुरागी महानुभावहरूको सहयोग र शुभेच्छाले बढ़ेर आजको भव्य विद्यालयमा परिणत भयो'रे!' **देशका श्रेष्ठ प्रधानाध्यापकहरूमध्ये एक छानिएर उहाँ इंल्याण्ड पुग्नुभयो'रे!**

कुमुदिनी होम्सले खेलकूदमा महान् उपलब्धि हासिल गरेको कुरो त सर्वविदित छ। त्यसबेला खेलकूद प्रत्येक छात्रको निम्ति अनिवार्य हुन्थ्यो। विद्यार्थीहरू हाउस-हाउसमा बाँड़िएका हुन्थे। हाउसहरूमाझ प्रत्येक क्षेत्रमा प्रतिस्पर्धा हुन्थ्यो। श्रेष्ठ खेलाड़ीहरूलाई स्कूल टीममा छानिन्थ्यो। स्कूल टीमलाई पनि खेलाड़ीहरूको स्तर हेरेर **ए डिभीजन** र **बी डिभीजन**मा बाँड़िन्थ्यो। हाम्रो स्कूल टीम मेलाटारमा उत्रेको दिन कालेबुङमा हलचल मचिन्थ्यो, उत्सव नै लागे जस्तो हुन्थ्यो। म्याच हेर्न आएका दर्शकहरूले पाखा-भित्ताहरू खचाखच भरिएका हुन्थे।

आज जीवनको यो मोड़मा आइपुग्दा मलाई लाग्छ जीवनको घेड़री विद्यार्थी जीवनमा नै खनिँदोरहेछ। नेपाली पढ़ाउनुहुन्थ्यो गुरुज्यू भरत थापाले। उहाँले व्याकरण घोटी-घोटी पढ़ाउनुहुन्थ्यो जसले गर्दा शुद्ध नेपाली लेख्ने अभ्यास भयो हामीलाई। पछि गुरुज्यू पी॰ एल॰ सुब्बाले पढ़ाउनुहुन्थ्यो नेपाली। हामीलाई साहित्यप्रति रुचि जगाइदिनुभयो उहाँले।

विद्यालयका भूतपूर्व छात्रहरूको एउटा संस्था कुमुदिनी परिवार स्थापित भएको थियो। विद्यालयको स्थापना दिवसको उपलक्ष्यमा परिवारको पनि वर्षेनी भेटघाट गर्ने, परिवारको नयाँ कार्यकारिणी छान्ने, हर-हिसाबको फाँटवारी गर्ने इत्यादि कामहरू यस दिन सम्पन्न हुन्थे, जो आजसम्म पनि चलिरहेको छ। कुमुदिनी परिवारले आफ्नो कार्यसूचीमा स्कूलको घण्टाघर मरम्मत गराउने योजना समावेश गरेको छ र चाँड़ो यो कार्यान्वित पनि हुने आशा छ।

हामीलाई सांसारिक कार्यक्षेत्रमा डटेर अघि बढ़्नु सक्षम बनाउने **चरित्रं हि बलम्**-को पाठ पढ़ाएर जीवनलाई उच्चतम आदर्श दिने हाम्रो महान विद्यालय कुमुदिनी होम्सले आफ्नो पूर्व गौरवलाई आत्मसात गर्दै उन्नतिको नयाँ उचाइमा पुग्नसकोस् भन्ने शुभकामना राख्दछु।❐







# सम्झनामा मेरा स्कूलका क्षणहरू

नाम● कमल रेग्मी
शिक्षा● एम॰ ए॰ (नेपाली) प्रथम दर्जा
प्रकाशित कृति● सङग्रहभित्रका कविताहरू (कविता सङ्ग्रह १९९७)
काँडाफूल (गीत सङ्ग्रह २००७)


■ कमल रेग्मी

सन् १९९२-९३ तिरको कुरा हो। कुमुदिनी विद्याश्रमका एघारौं-बाह्रौं श्रेणीका छात्रहरू थियौं हामी। आफ्नो गाउँमा त्यसबेला 'हायर सेकेण्ड्री' थिएन। शहरको स्कूल पढ्न आएका हामी गाउँका ठिटाहरू। रमाइलो जत्ति लाग्थ्यो उत्ति नै घरको पनि सम्झना आउँथ्यो।

दशौं श्रेणीसम्मका कतिपय पाठ्यपुस्तकहरूका लेखकहरू कुमुदिनी होम्समा देख्न पाउँदा हुनसम्मको खुशी लाग्थ्यो। पासाङ छिरिङ सर, पी॰ सी॰ अग्रवाल सर, डी॰ डी॰ आर॰ सर हाम्रा स्कूलका सरहरू हुन् भनी छुट्टीमा घर जाँदा ढोल पिट्थ्यौं। आम्मामामा --भने झैं गरी सबै छक्क पर्थे। यस्ता स्कूल पढ़ेको हौं हामी।

श्री सी॰ बी॰ राणा सर तत्कालीन स्कूलका प्रधान अध्यापक हुनुहुन्थ्यो। स्कूललाई सधाएका थिए उनले। माउतेले हात्ती सधाएजस्तै। ठिटाहरू राणा सर भने पछि डरले लुपुक्कै हुन्थे। हामी तर राणा सर भन्दा धेर सुरेन दाज्यूसँग डराउँथ्यौं। डराउनुपर्थ्यो उनीसँग, डर देखाउँथे हामीलाई। हो न ही पत्याउँथ्यौं हामी र डराइहाल्थ्यौं । यस्ता स्कूल पढ़ेका हौं हामी।

खगेन्द्र हाङ साङ्पाङबे सर। सबभन्दा डरलाग्दा देखिन्थे। तर थिएनन् त्यस्ता। जैले पनि पढ़िरहेकै हुन्थे। नपढ़ी बसेको र नेपाली बोलेको हामीले उनलाई कहिल्यै देखेनौं /सुनेनौं। धमाला मिस उत्तिकै मीठो अङ्ग्रेजी बोल्लुहुन्थ्यो। सुनेर हामी मक्ख पर्थ्यौं। स्कूलका विशेष कार्यक्रममा उद्घोषिकाको भार सम्हाल्थिन् गुरुमाले। याङदेन सर खूब रमाइला, फरासिला पनि। खूब माया गर्नुहुन्थ्यो। अचेल कम चिन्नुहुन्छ। स्कूलका सह-प्रधानाध्यापक पनि हुनुहुन्छ याङदेन सर, अहिले। गौतम सर इतिहास पढ़ाउनुहुन्थ्यो। एकदिन क्लासमा केटाहरूले ध्यान नलगाउँदा किताबको झटारो हानेर बाहिर निस्केका थिए गौतम सर। हिजो जस्तो लाग्छ।

अब ती समयहरू छैनन् मुट्ठीमा। जोहन सर, उमेरले पनि होला शायद, कम खट्थे। देवीमाया मिसले पढ़ाएको नेपाली साहित्यको संक्षिप्त इतिहास अहिले पनि सम्झनामा झल्झली छ। देवीमाया मिस साह्रै सिम्पल, दुःख सुखका कुराहरू बाँड्नुहुन्थ्यो कोही-कोही बेला। गुरुमाभन्दा धेर 'दिदी' लाग्थ्यो उनलाई।

सीताराम काफ्ले सर मेरो शैक्षिक गुरुमात्र होइनन्, मेरा साहित्यिक प्रेरक पनि हुन्। एकदिन श्रेणीका साथीहरू







आएर मलाई भने 'काफ्ले सरले बोलाउनु हुँदैछ।' सरले बोलाउनु भएको कुराले म एकछिन डराएँ। अचेल डराउँदैनन् विद्यार्थीहरू त्यसरी। सरकहाँ गएँ। घर सोध्नुभयो, बताएँ। बाबाको पेशा सोध्नुभयो, त्यो पनि बताएँ। 'ए म त टिचर होला जस्तो लाग्यो, तिम्रो नेपाली लेखाइहरू देखेर। तिमीले राम्रो गरेको छौ। मेरो पेपरमा तिमीले हाइयेस्ट पाएका छौ, स्याबास् राम्रो गर्नु, अझै राम्रो।' मैले नेपालीको मासिक परीक्षामा २० मा १८ पाएको थिएँ। अहिल्यै जस्तो लाग्छ। तर अहिले होइन।

एकदिन पी॰ एल॰ सुब्बा सरले हामीलाई बिहान एसेम्ब्लीको बेला आकाशमा तारा देखाएका थिए। दिउँसै तारा देख्यौं हामीले त्यत्तिबेला। स्कूलको छानाको कुनामा चरा-चुरुङ्गीले गुँड़ लगाएका हुन्थे। नभत्काउनु भनेर हामीलाई प्रत्येक दिन भन्थे उनी। माइक्रोफोनमा जनगण गाएर हामीलाई सिकाउँथे उनी। स्व॰ राणा सर खानीबाट आएका। गाउँले जीवनको सरलता र सरसताको कुरा गर्थे। पी॰ सी॰ अग्रवाल सरले खूबै रसिकता र रमाइलो ढङ्गले इकोनोमिक्स पढ़ाउँथे। सबै गुरु-गुरुमा साँच्चै राम्रो हुनुहुन्थ्यो। कालेबुङ गएको बेला कोही-कोही समय स्कूल जाने गर्छु। पुराना सर गुरुमाहरू सबै रिटायर्ड भइसके। नोकरीबाट मात्र होइन जीवनबाटै इस्तिफा दिइसके कत्तिले त।

साथीहरू हामी विभिन्न ठाउँबाट आएका थियौं। सबै मिल्थ्यौं, एउटै परिवारका भएर। हामी कुमुदिनी परिवार थियौं। २४ मई स्कूल दिवस खूब धूमधामले मनाउँथ्यौं। शहरकै स्कूल भए तापनि हामी गाउँबाट आएकाहरूलाई भानुभक्त स्कूलबाट आएकाहरू भन्दैनथे। कालेबुङकै प्रसिद्ध होम्सका विद्यार्थी हुनपाएकोमा म आफूलाई अग्घोरै गर्व लाग्छ।

अब त कुमुदिनी होम्सका भूतपूर्व विद्यार्थी भयौं हामी। कसैले होइन भन्न सक्तैनन्। स्कूलको इतिहासमा अब कैद भएका छौं सधैं-सधैंलाई...।□









# झझल्को मात्रै रह्यो...


■ दिनेश खाती

नाम● दिनेश खाती
जन्म-मिति● १० मार्च, १९७७
जन्मथलो● मिरिक, खरसाङ
पिता एवं माता● श्री बुद्धिमान खाती एवं श्रीमती दिलमाया खाती
शिक्षा● उच्च माध्यमिक (बाह्रौं श्रेणी)
पेशा● भारतीय जीवन बीमा निगममा अभिकर्त्ता
प्रकाशित कृति● स्मृतिको गर्भभित्र (कथा सङ्ग्रह), जीवन-पथ (उपन्यास), आशाको महलभित्र (कथा सङ्ग्रह), विकल्प
सम्पादन● प्रेरणा ( अर्द्ध-वार्षिक पत्रिका), आकाशवाणी खरसाङबाट अनेकन नाटकहरू प्रसारित
संस्थागत सेवा● भद्रेको टोली, भारतीय गोर्खा परिसंघ।

सन् १९९२-मा माध्यमिक परीक्षा उत्तीर्ण गर्ने कुमुदिनी विद्याश्रमका तीन भूतपूर्व विद्यार्थीहरू ...क) निमा लामा ख) दिनेश खाती ग) प्रदीप अग्रवाल

**(सड़कछेउकै चिया पसल भए तापनि साँझ गहिरिँदै गइरहेकोले पसल खाली छ। पसले निमा आफ्नो कुनै पुरानो मित्रसित फोनमा बात गरिरहेछ ...)**

**निमाः** ल! ल!! आउने नि। सबै साथीहरू भेला भई अतीत बल्झाउँला। खाकीको प्यान्ट र सेतो सर्टका ती स्वर्णिम पलहरूमा एकपल्ट फेरि रमाउँला। लौ! लौ!! ओ के। सी यू अन टोएन्टी फोर्थ... बाइ।

(फोन बन्द गर्छ। त्यसै समय दिनेश दोकानको दैलोमा उभिन आइपुग्छ। हात बड़ाउँदै पुनः निमा बोल्छ...)

ओहो! हेल्लो दिनेश। वाट अ प्लिजेन्ट सरप्राइज। प्लीज गेट इन्। आज त साँच्चै पुराना साथीहरूको आवाज सुन्न पाउने र दर्शन गर्न पाउने दिन रहेछ।

**दिनेशः**(ग्राहक बस्ने लामो बेञ्चमा बस्दै।) हो र?

**निमाः** अन्त के त। भखरै सुनीलको फोन आएथ्यो दिल्लीबाट।

**दिनेशः**(जिज्ञासु बन्दै)हाम्रो सुनीलको?







**निमाः** (हर्षसाथ) अँ, हो! हाम्रै सुनीलको। पूरा एक वर्षपछि फोन गरेको त्यसले।

**दिनेशः** के भन्दैथ्यो त?

**निमाः** के भन्थ्यो र मन खिन्नपार्छ नि। गाँस, बास र कपासको कारण परदेशिन पऱ्यो। साथीहरूबाट,आफू जन्मेको, हुर्केको, पढ़ेको, बड़ेको पाखाबाट टाड़िएर दिल्ली जस्तो विशाल शहरमा सब्बै एक्लो बन्न पऱ्यो भनेर!

**दिनेशः** (गम्भीर भई) खै, के गर्नु र। यस भेकमा कलाको, योग्यताको कुनै स्थानै छैन भनौं भने मधेशबाट हूलका-हूल आएका मान्छेहरू यसै भेकमा स्थापित भइरहेका छन्। परिवार धान्ने काम मात्र होइन, सम्पत्ति जोड़ने काम पनि सफलतापूर्वक गरिरहेकै छन् तर खोई! यहाँकाहरू चाहिँ बेकारीपनको रापमा पिल्सिएर परदेश पस्न बाध्य हुन्छन्। अब यसलाई विधिको विधान मान्ने कि यहाँकाहरूका अकर्मण्यता। साँच्चै, अन्योलमा छु म त।

**निमाः** तिमी लेख्ने मान्छे। जुनै पनि कुरालाई लामो सोंच्छौ; तर म त एउटै कुरा मान्छु यार दाने-दानेपे लिखा है खानेवाले का नाम। अब सुनीलको दाना-पानी दिल्लीमा थियो, त्यसैले त्यसलाई भाग्यले त्यतै पुऱ्यायो।(केहीक्षण वातावरण स्तब्ध बन्छ। दिनेश र निमा आ-आफ्नो मन-मस्तिष्कसित अल्झन र उल्झन लाग्छन्। केही बेरपछि मौनतालाई भंग गर्दै दिनेश बोल्छ...)

**दिनेशः** हामीलाई सोध्यो?

**निमाः** सोध्यो मात्रै? हाम्रो पूराका पूरा दैनन्दिनी लिन खोज्दैथ्यो। हप्तामा कतिचोटि भेला हुन्छौं साथीहरू भनी सोद्धैथ्यो।

**दिनेशः** अन्त के भनिदियौ त?

**निमाः** के भन्ने र अब। भनिदिएँ हाम्रो पनि यहाँ भेटघाट हुन छोड़िसक्यो। घरजम गरी सबै नै आ-आफ्नो जिम्मेवारी निभाउन व्यस्त छन् भनेर। अल्लेर छँदाका जीवनशैली, मित्रता र त्यसताकका सपनाहरू सब केवल झझल्को मात्रै बनेर बस्न पुगेको छ भनेर।... अन्त तिमीले चाहिँ कसरी याद गऱ्यौ नि आज? नाटक छोड़ि एल॰ आइ॰ सी॰-को ब्याग बोक्न थालेदेखि त तिमीले पनि कला-साहित्य,साथी भाइ सब, भुलिसक्यौ नि।

**दिनेशः** भुल्न चाहेर भुलेको कहाँ हूँ र। भुलेको छैन नि। नियतिले गर्दा मात्र टाड़िएको हूँ। झझल्को मात्रै होइन। अझै पनि रहर छ, कला-साहित्य र साथी-भाइकै भई बाँचु तर के गर्नु घर-परिवार र जिम्मेवारी पनि त छ। (झट्ट सम्झेर) साँची भन्दा २४ मई पनि नजिकै पो रहेछ त हगि?

**निमाः** अँ, आइहाल्यो नि। २५,२६ दिन त रह्यो तर तिम्रो त त्यै होला, पोहोर साल जस्तै साथीहरूलाई आउँछु भनेर आफू चाहिँ बिजनेसतिर टाप।

**दिनेशः** के गर्नु त साथी! बजार कत्तिको कमपिटेटिभ भइसकेको छ, तिमीबाट लुकेको छैन। यहाँ एउटा पलिसीको निम्ति दशचोटि एउटैको घर धाइहुन्छ। यस्तो स्थितिमा क्लाइन्ट आफैले फोन गरी बोलाउँदा कसरी नजानू? आफै सोंच त।... अँ, तर यसचोटि फेर पर्दैन। नसुर्ताउनू, क्यै गरेर पनि मैले नआई भएकै छैन।

**निमाः**( जिज्ञासु बन्दै) किन यसपाली क्यै खास?

**दिनेशः** २४ मई कुमुदिनी विद्याश्रमका कुन विद्यार्थीको निम्ति खास दिन हुन्न र, कुमुदिनी त







कुमुदिनी भयो यहाँ त सारा कालेबुङ झुम्छ त्यसदिन। २४ मई नै त हो त्यो दिन जुन दिन विद्याश्रम छोड़ी नाती-पनातिका धनी भइसकेकाहरूले पनि आफू विद्यार्थी छँदाका दिन र कुमुदिनीमा आफूले बिताएका पलहरू सम्झी रोमाञ्चित हुने गर्छन्। अँ, यसपाली अझ थप खुशीयाली छ। हाम्रो कुमुदिनी परिवारद्वारा एउटा स्मारिका निकालिँदैछ। यसको २४ मईकै दिन विमोचन हुनेछ।

**निमाः** ए! भनेपछि हजुरले पनि एउटा लेख त लेख्ने नै हो अनि...।

**दिनेशः** त्यस्तो क्यै छैन। पुराना, लब्धप्रतिष्ठित दाइहरू छन्। श्रीमान महानन्द पौड्याल,ज्ञान सुतार, भक्त परियार, टी॰ एन॰ सुवेदी, मोतीप्रसाद शर्मा जस्ता हस्तीहरूका सामू हामी जस्ता फुच्चे...तर पनि लेख्न परेको छ। दाज्यूहरूको आदेशले। भोलि अन्तिम दिन लेख दिनैपर्छ।

**निमाः** अन्त लेखेर देऊ न त।

**दिनेशः** तर लेख्नै सकेको छुइनँ।(भावुक बन्दै) लेख्न बस्छु। कुनै एउटा वा एक दिनको स्मरण लेख्न चाहन्छु तर कुन्नि किन खाकीको प्यान्ट र सेतो सर्टमा ती साथी-भाइहरू, आमा-बाबुसरह सर-गुरुमाहरूसित कुमुदिनीमा बिताएका प्रत्येक पलहरू नै अविस्मरणीय लाग्छ। स्मृतिपटमा तैंछाड़ र मैंछाड़ गर्दै ती पलहरू उज्यालिन्छन् अनि त मेरो कलम, मेरो कलम लाट्टिन्छ- साथी।... साँच्चै कत्ति स्वर्णिम थिए नि, ती पलहरू।

**निमाः** हो नि! अब फेरि ती दिनहरू कहाँ फर्कने हुन् र यस धर्तीमा। (अतीतमा डुब्दै) साना श्रेणीहरूमा छँदाका होस्टेल परको त्यो पंधेरीमुनि पानी जमेको ठाउँमा माछा खोजाइ। साँची तँलाई थाहा छ, एक दिन टिफिनको छुट्टीमा स्कूल ग्राउण्डको त्यहाँ पानी छेपुवाको पुच्छरमा धागो बाँधी उड़ाउने खेल्दा पाचौं पिरियड मिस भएकोले गोदाइ खानु परेको?

**दिनेशः** झझल्को आउँछ, बेला-बेला। त्यो पाँचौ पिरियड कुमार सरको थियो।

**प्रदीपः** (एकाएक प्रवेशिँदै) एई! बुझ्यो क्यारे, कुन सरको थेगो?

**दिनेशः** फिजिकल साइन्स।(दुःखीभाव) तिवारी सर पनि बितेर जानु भयो।

**निमाः** बस न प्रदीप। किन उभिएको अन्त?

**प्रदीपः** बजारबाट घर फर्केको। दिनेशको स्वर सुनेर अड़ेको। हाम्रो स्कूले दिनहरूको कुरा चल्दैरहेछ। भित्र नपसी सकिनँ। पर राकेशसित पनि भेट भएथ्यो। म, दिनेश, मदन, सुनील, नालेश, तँ र रविले २४ मई र ५ सितम्बरमा खेलेका नाटकहरू याद गर्‍यौं। दिनेशको लेखाइ र सरहरूका सुझाउमा साँच्चै राम्रा-राम्रा नाटकहरू खेल्न पाइयो नि। यो दिनेशलाई त झन ती दिनहरूले कलाकार-साहित्यकार बनाइदियो।

**दिनेशः** मलाई मात्र कहाँ हो प्रदीप। मलाई मात्र कहाँ हो र। **चरित्रं हि बलम्** अंकित हाम्रो स्कूलको गेटभित्र जो पस्यो उसले एक कुशल र योग्य व्यक्ति बन्ने सबथोक पायो। फरक यत्ति हो कतिले त्यसलाई आफ्नो दैनन्दिनीमा प्रयोग गरे त कतिले थान्को लाए।

**निमाः** जसरी दिनेशले भर्ब टू बी सर्...

**प्रदीपः**(कुरा काट्दै,रिसाए झैं गरी) अब त छोरा नै क्लास सिक्स पुग्यो, तँ आफू क्लास सिक्स हुँदाकै बोली नबोल न। सरहरूका नाम त इज्जत्...

**निमाः** ओ के पार्ट। तर के गर्नु आफू







पैंतीसको लग लागिसकेको भए तापनि ती दिनहरू याद आउँदा, पुनः एकचोटि नाकभरी सिङ्गान बोकेर कुमुदिनीको आँगनमा कुदिरहने, साथीहरूसित इत्रिँदै खेदाखेद गरिरहने अनि हातमा रेजिष्टर च्यापी पी॰ एल॰ सुब्बा सर आउँदै गरेको देखेँ सासकोभरमा साथीहरूला ***भर्व टू बी सर आउनु भयो*** भन्दै सास न बास भएर क्लासभित्र पस्ने क्लास सिक्स कै विद्यार्थी हूँ कि भन्ने भान हुन्छ।

**दिनेशः** ठीकै भन्यौ निमा तिमीले। साँच्चै विद्यार्थी जीवनका ती क्षणहरू याद आउँदा वर्तमानको आफ्नो स्तर भुलिँदोरहेछ।

**प्रदीपः** याद आउँदा मात्रै? मलाई त बाटोघाटोमा सर-गुरुमाहरू भेट्दा पनि कुन्नि किन डर लाग्छ।

**निमाः** किन? सिर्कना खान्छु भनेर?

**प्रदीपः** हो त यार। स्कूले दिनमा अलिक चञ्चले र अटेरी नै थिएँ म त्यसैले पी॰ एल॰ सर, देवान सर र भरत सरको सिर्कनाको त ठिका नै चल्थ्यो। अन्त अब अहिले पनि सर-गुरुमाहरू भेट्दा **प्रदीप यता आइज** भन्ने हो कि डर लाग्छ।

**दिनेशः** हामी हाम्रा सर-गुरुमाहरूका इज्जत गर्थ्यौं। गुरुजनहरूले पनि आफ्नो विद्यार्थीहरूलाई, आफ्नै छोरा-छोरीसरह मान्थे। त्यसैले त किताप र क्लास बाहिर पनि अभिभावक थिए। अभिभावक रहे उनेरू- हाम्रा। स्कूले ती दिनहरूमा त भए भए हिज आज पनि, अझै पनि एल॰ आई॰ सी॰-को ब्याग बोकी एस॰ डी॰ लामा सर भेट भए लक्ष्मी प्रसाद देवकोटाको **'जिन्दगीको मौसम'** कविता सुनाएर मलाई हौसला दिनुहुन्छ।

**प्रदीपः** भरत सर, बी॰ सी॰ सुब्बा सर, ब्लोन सर जस्ता बाबुसरह सरहरू कहाँ पाइन्छन् र अचेल?

**निमाः** अब त विस्तार-विस्तारै सबै कमरसियल हुँदैछ साथी हो।

**दिनेशः** त्यसैले त म भन्छु मेरो छोरा दीपूलाई मैले जस्तो तैंले केशी भोटिया गुरुमा भेट्दैनस् भनेर।

**निमाः** साँच्चै के॰ सी॰ मीस है, कसैलाई कहिल्यै हिर्काउनु भएन तर सबै छुलछुल।

**दिनेशः** तर के सी गुरुमाको डरले कोही छुलछुल थिएन निमा। कुन्नि के थियो, के छ- उहाँमा। उनको अघि कस्ता-कस्ता बदमाश छात्रहरूले पनि बदमाशी र अटेरी गर्ने आँटै गरेन। बदमाश-बदमाशहरूले पनि आमा आयो भनी छापछूप भएको, धेरै पल्ट मैले देखेँ। मलाई त अहिले पनि बेला-बेला मन दुःखेको क्षणहरूमा उनकै न्यानो मायाको याद आउँछ।... उहाँ नभइदिएकी भए नवौं श्रेणीमा नै पढ़ाइमा विराम लाग्नेथ्यो मेरो। धेरै पढ्न त सकिएनँ। धेरै पढ़ेर, गुरुमाले बनाउन चाहेको मान्छे बन्न सकिनँ - म त्यसैले उहाँलाई भेट्दा अप्ठ्यारो लाग्छ।(गह्रौं स्वर, गम्भीर मुहार लिएर ठप्प रोकिन्छ दिनेश। त्यसै समयमाथिबाट निमाको पत्नीले निमालाई बोलाउँछे...)

**नेपथ्यबाट निमाकी पत्नीः** निऽऽऽ माऽऽऽ अब दोकान बन्द गर है।

**प्रदीपः** लौ! अब लागौं होला। ती दिनहरूका कुरा जत्तिनै गरे पनि न त टुङ्गिने, न हामीहरूले त्यसलाई दोहोऱ्याउन पाउने हो।

**निमाः** दोहोऱ्याउन? अब फेरि-फेरि त्यस्ता दिनहरू देख्न पनि पाइन्न साथी हो। भीडियो गेम र कम्प्यूटरको यस युगमा कहाँ खेल्छन् र नानीहरू **हो** **कि** के, कहाँ खेल्छन् र **पानी छेपुवाको पुच्छर बाँध्ने खेलहरू।**







**दिनेशः** ठीक भन्यौ निमा,तिमीले। युग परिवर्तन भइसकेको छ। विस्तार-विस्तारै भरत सर, पी° एल° सर, देवान सर, लामा सर, सोड्पाङ्बे सर, र के सी गुरुमा जस्ता गुरुहरू हराउँदै जानेछन्। गुरु र शिष्य बीच केवल व्यवसायिक सम्बन्धले स्थान लिनेछ। लिन थालिसकेको छ... अनि त सबै अर्कै हुनेछ एकदिन। नीरस, सुक्खा।

**निमाः** त्यसैले त गुरु र शिष्य बीचको सम्बन्ध बद्लिँदै गएको ...,अचेलका नानीहरूका बाल-क्रीड़ाहरू बदलेकोले नै गर्दा त अघि सुनीललाई पनि फोनमा भनिदिएँ साथी, अब झझल्को मात्र रह्यो भनेर। केवल केवल झझल्को।

**(सबै मूर्तिवत बन्छन्)**







संस्मरण

# कुमुदिनी होम्स्- उत्थान र विकास

नाउँ● हर्कबहादुर परियार (हर्क परियार)
जन्म●१० अक्टोबर १९४०(कालेबुङ)
शिक्षा● एघारौं श्रेणीसम्म कुमुदिनी विद्याश्रमबाट अनि स्वाध्ययनद्वारा बी॰ ए॰
सम्प्रति● स्वतन्त्र लेखन
साहित्यिक योगदान● विभिन्न पत्र-पत्रिकाहरू नेपाली अनि हिन्दी भाषामा फुटकर रचनाहरूको प्रकाशन। विद्यार्थीदेखि नै साहित्यप्रति रुचि।
वर्तमान ठेगाना● तल्लो गुम्बाहट्टा, कालेबुङ।


हर्कबहादुर परियार

सन् १९५३ सालमा बजारको टाउन सकूलबाट चौथो श्रेणी उत्तीर्ण गरी वर्त्तमान स्कूलको पाँचौ श्रेणीमा आएका थियौं। हाम्रो श्रेणी हाल क्यान्टीन रहेको काठको घरमा हुनेगर्थ्यो। उक्त श्रेणीमा छात्रहरूको संख्या अत्यधिक बढ़ेको हुनाले शहरीक्षेत्र र होस्टेलका छात्रहरू अनि टाड़ा गाउँबस्तीबाट आउने छात्रहरूलाई दुइ भागमा विभक्त गरी पढ़ाउने व्यवस्था गरिएको थियो। पहिलो समूहका छात्रहरू बिहान ७ बजेदेखि ९:३० बजेसम्म अनि अपराह्न २:३० बजेदेखि ४:३० बजेसम्म दोस्रो समूहका छात्रहरू ९:३० बजेदेखि २:३० बजेसम्म पढ़ने गर्थ्यौं।

बजारको टाउन स्कूल म्युनिसिपल बुनियादी पाठशालामा परिवर्तित भएको थियो। यसका हेडमास्टर स्व॰ श्री॰ एस॰ एन॰ प्रधानज्यू हुनुहुन्थ्यो। बाघधाराको स्कूल भवन तयार भएपछि सन् १९५९-मा म्युनसिपल निम्न बुनियादी पाठशाला स्थायीरूपमा स्थापित गरिएको थियो। सन् १९५३ साल २९ मईको दिन स्व॰ तेन्जिङ नोर्गे शेर्पा र एडमण्ड हिल्लेरीद्वयले आफ्नो मानवी पाइलाहरूले सर्वप्रथम सगरमाथाको शिखर स्पर्श गरेर इतिहास रचेका थिए भने कुमुदिनी होम्सले पनि धर्महल, राजादोर्जी टावर र नयाँ भवनको निर्माण कार्य यसै वर्षदेखि थालनी गरेर शिक्षणको क्षेत्रमा शिखर छुन पाइला चालेको थियो। स्कूलका सम्पूर्ण छात्रहरू पालैसित निर्माण कार्यमा श्रमदान गरी कारीगरहरूलाई सहयोग पुऱ्याउने गर्थ्यौं। शिक्षकहरू लगायत छात्रहरूमा निकै जोश र उत्साह थियो। तिनताक काठका घरहरूमा नै कक्षाहरू सञ्चालन गरिन्थे। नयाँ भवनहरूको निर्माण कार्य सँगसँगै स्कूलको शिक्षण कार्य र अन्य सम्पूर्ण क्रियाकलापहरू सुचारु रूपले चल्ने गर्थे।

प्रारम्भिक कालदेखिनै कुमुदिनी होम्सका छात्रहरू पढ़ाइ, खेलकूद, फुटबल, सङ्गीत आदि क्षेत्रमा अघाड़ि नै रहनेगर्थे। स्कूलले हाई स्कूलको मान्यता प्राप्ति पूर्व मेट्रिक बोर्ड परीक्षा प्राइवेट परीक्षार्थीको रूपमा दिएर पनि छात्रहरू पास भएका थिए। मान्यता प्राप्ति पश्चात् १९५३ सालमा छात्रहरूले







अधिकारिक रूपमा मेट्रिक बोर्ड परीक्षा दिएका थिए। परीक्षा फल पनि उत्तम रहेको कुरा पुराना छात्रहरू बताउने गर्छन्। युद्धस्तरमा थालिएको निर्माण कार्य, कारीगरहरूको कार्य कुशलता, प्रधानाध्यपक श्री टीकारामज्यूको मार्ग निर्देशन, जनता, अभिभावकवर्ग, शुभचिन्तकहरूको सहयोगको फलस्वरूप प्रायः अल्पावधिमा नै गेट, धर्महल, राजा दोर्जी टावर र नयाँ भवन तयार भएका थिए। २४ मई १९५५-को दिन विद्यालय **स्थापना दिवस**-को अवसरमा धर्म हलको बड़ो धूमधामपूर्वक उद्घाटन गरिएको थियो।

**सन् ५३ देखि ६३ सालसम्मका वर्षहरूलाई कुमुदिनी होम्स्को उत्थान र विकासको काल मानिन्छ।** स्कूलको आदर्श वाक्य **चरित्रं हि बलम्** अंकित मोनोग्राम तयार भएपछि स्कूलमा यूनिफार्म, ब्याज, गोलो ब्लू कैप, ब्लेजरमा मोनोग्राम लगाउने चलन शुरु भयो। शिक्षक विजय बस्नेतको नेतृत्वमा स्काउटिङ्ग शुरु गरियो। गेम्स टीचर स्व॰ ज्ञापन रोङ्गोङको देखरेखमा फुटबलका खेलाड़ीहरू अघि बढ़दै गए अनि १५ अगस्ट १९५५-को दिन कालेबुङको विद्यालय टीमहरूमा सर्वप्रथम हाम्रो टीमले प्रतिष्ठित **स्वतन्त्रता दिवस शिल्ड** जीतेर फुटबल खेलमा भविष्यको बलियो नींव राखिदिएको थियो।त्यसै वर्ष स्कूलहरूमा सर्वप्रथम ब्याण्ड प्रशिक्षण आरम्भ गरियो। ब्याण्ड मास्टर स्व॰ श्री दिकपाल दर्नाल हुनेगर्थे।

१९५६ सालको नयाँ सत्रमा मन्टेसरीका कक्षाहरू आरम्भ गरियो। तृणमूल स्तर देखि नै मेधावी छात्रहरू उब्जाउने उद्देश्यले मन्टेसरी शिक्षण प्रणाली चलाएर श्रद्धेय प्रधानाध्यापक टीकारामज्यूले आफ्नो बुद्धिमताको परिचय दिएका थिए। उहाँको उद्देश्य फलीभूत पनि भएको थियो। कारण, यिनै छात्र-छात्राहरूले पछि गएर विद्यालयको गरिमा बढ़ाएका थिए। यत्ति नै बेला श्रीमती शान्ता प्रभा प्रधान, मधुमालती प्रधान, सरस्वती दीक्षित, कमला मिश्रा आदि प्रशिक्षित शिक्षिकारू आएका थिए।

स्कूलको प्रारम्भिक कालदेखि सन् ५६ सालसम्म प्रधानाध्यापक शर्माज्यू लगायत शिक्षकहरूमा सर्वश्री बी॰ सी॰ सुब्बा, ज्ञापन रोङ्गोङ, पी॰ पी॰ शर्मा, टी॰ आर॰ बर्मन, बेगराज भंसाली, प्रभाकर गुरुङ, बद्री नारायण प्रधान, विजय बस्नेत, भरत कुमार थापा, जेम्स पाण्डे, डे सर, नारायण मणि प्रधान, रणधोज, सी॰ बी॰ राणा, शाहा सर, दावा छिं॰ भोटिया, विभव सिमिक, डी॰ बी॰ मोक्तान, रुपराम देवान, एस॰ के॰ प्रधान, पी॰ एन॰ तिवारी विजयशङ्कर सिंह, बी॰ एन॰ सिंह, पी॰ एस॰ पाण्डे, आर॰ के॰ शर्मा आदि जस्ता अनुभवी शिक्षकहरू हुने गर्थे। हेडक्लर्क स्व॰ ए॰बी॰ कुमाई रहेका थिए।

सन् १९५७ सालदेखि मल्टिपर्पोज हायर सेकेण्डेरी प्रणाली अन्तर्गत नवौं श्रेणीका कला र विज्ञान कक्षाहरू चालू गरिएका केही वर्ष पश्चात् वाणिज्य कक्षा पनि शुरु गरिएको थियो।स्कूलमा जुनियर एनसीसी शुरु गरियो। स्व॰ ज्ञापन रोङ्गोङ एनसीसी टीचर हुने गर्थे पछिबाट श्री खगेन्द्रहाङ्ग सुब्बा आएका थिए। १९६० सालमा हायर सेकेण्डेरी एघारौं श्रेणी प्रथम ब्याचका छात्रहरूले बोर्ड परीक्षा दिएका थिए।परीक्षाफल अति उत्तम रहेको थियो।

यही अवधिमा स्कूलको प्रथम पत्रिका प्रकाशित भएको थियो। ५७ देखि ६०-का वर्षहरूमा सालतिर श्रीमती गंगा पाखीन, इन्द्रमणि प्रधान, खिदमत सुब्बा, कमल दीक्षित, ललित परियार, टी॰ बी॰ राई, कालीचरण गुप्ता जस्ता योग्य र अनुभवी







शिक्षक-शिक्षिकाहरू आएका थिए। विज्ञान प्रयोगशाला पनि बनाइएको थियो। १९५८-को वर्षमा प्रति छात्र एक सय रुपियाँको दरले अंशदान गरी प्रधानाध्यापक र अन्य शिक्षकहरूको अगुवाइमा एउटा टोली **अल इण्डिया टूर**-मा गएको थियो।

६०देखि ६३-का वर्षहरूमा स्कूलको फुटबल टीमले लगातार दुइ पटक राष्ट्रिय स्तरको **सुब्रतो कप** टुर्नामेन्ट अन्तर्गत उत्तर बङ्ग च्याम्पियन बनी राज्य स्तरको प्रतिस्पर्धामा भाग लिन कलकत्तासम्म पुगेको थियो।

शिक्षण बाहेक स्कूलमा विभिन्न प्रतियोगिताहरू जस्तै वाद-विवाद, क्वीज, कविता-पठन आदि आयोजन गरिन्थ्यो। क्राफ्ट प्रशिक्षणको व्यवस्था थियो। स्व॰ श्री एन॰ बी॰ छेत्री ल्याब असिस्टेन्ट रहेका थिए।

धर्महलभित्र ब्याडमिण्टन कोर्ट बनाइएको थियो साथै टेबल टेनिस पनि खेलिने गरिन्थ्यो। यसरी विद्यार्थीहरूलाई प्रत्येक क्षेत्रमा निपुण बनाउन सबै साधनहरूको व्यवस्था थियो। धर्महलको मञ्चले शैक्षिक, साहित्यिक, साङ्गीतिक, सामाजिक, सांस्कृतिक आदिको उत्थानमा ठूलो योगदान पुऱ्याएकोथ्यो। **भक्त प्रह्लाद, मुना-मदन, शाहजहाँ, अमर सिंह थापा, आमाको पुकार, चेली, टुहुरी** जस्ता नाटकहरूले कालेबुङको नाटक विधालाई फस्टाउनमा ठूलो योगदान पुऱ्याएको कुरोलाई नकार्न सकिँदैन।

यसरी कठोर अनुशासनका पक्षधर रहेका टीकारामज्यूले सदैव इमान्दारिता, सत्यवादीता, कर्तव्य परायणताको अर्ती दिनेगर्नु हुन्थ्यो। यसैको फलस्वरूप प्रायः सम्पूर्ण विद्यार्थीहरू कर्मको प्रत्येक क्षेत्रमा सफलता अर्जित गर्न सक्षम भएका थिए। छात्रहरू मात्र नभएर शिक्षककहरूमा सर्वश्री ललित परियार (आइएएस), डी॰ बी॰ मोक्तान, (डब्ल्यू बी॰ सी॰ एस॰), नारायणमणि प्रधान(सैन्य अधिकारी), खिदमत सुब्बा (जनता कलेज प्राचार्य) बने भने रुपराम देवानले वर्त्तमान नेपाली साहित्य अध्ययन समितिको स्थापनामा सहयोग पुऱ्याइ स्कूलका गौरव बढ़ाएका थिए। श्री विजय बस्नेत सिक्किम राज्यमा प्रशासनिक सचिव रहेका थिए।

रोचक तथ्य के हो भने भारत स्वतन्त्र वर्षमा नै स्व॰ आर॰ पी॰ शाहाले घरलगायत भूमिदान गरे पश्चात् टाउन जुनियर हाईस्कूल पनि प्रगति पथमा बढ़न थालेको हो। स्वाधीन भारत र कुमुदिनी होम्सको विकासक्रम समकालीन रहेको छ। प्रथम प्रधानमन्त्री नेहरूजीको नेतृत्वमा स्वाधीन भारत अघि बढ़दै थियो भने त्यसरी नै स्व॰ शर्माज्यूले कुमुदिनी होम्सलाई पनि प्रगतिको पथमा डोहोऱ्याएर लगेका थिए। पुराना मानिसहरूको भनाइ अनुसार सम्भवत्ः सन् १९३४ मा माटो र बाँसको घरमा रात्रि पाठशालाको रूपमा स्थापित टाउन एम ई स्कूललाई वर्तमान स्वरूप दिन उहाँको सक्षम नेतृत्व, योग्यता अनि मार्ग निर्देशनकै प्रतिफल हो।

पंक्तिकार १९४७ भूइँ कक्षा देखि १९६२ सम्मको अवधिमा कुमुदिनी होम्स्सँग जुड़ेको हुनाले जानेको कुरालाई स्मरण गर्दै उक्त संस्मरणमा समावेश गर्ने प्रयास गरिएको मात्र हो- कतिपय तथ्यहरूमा तलमाथि र भूलचूक रहे क्षमाप्रार्थी रहेको छु।

अर्कोतिर श्रद्धेय गुरुजी स्व॰ टीकारामज्यूले कुमुदिनी होम्स्को उत्थान र निर्माणमा दिएको अमूल्य योगदानलाई अमरत्व प्रदान गर्न उहाँको स्मृतिमा एउटा सालिग स्थापना गरिए उहाँप्रति साँचो श्रद्धाञ्जली हुने







छ भन्ने धेरै जनाको मन्तव्य साकार तुल्याउन सक्षम हुन सके हामी सबै धन्य हुने थियौं कि?

*स्कूलसँग सम्बन्धित सम्पूर्ण दिवङ्गत आत्माहरूप्रति हार्दिक श्रद्धाञ्जली समर्पित गर्दै उक्त संस्मरण यही टुंग्याउन चाहन्छु।*







# साथी रामकृष्णः एक संस्मरण

स्व॰ टीकाराम शर्मा

मानिसको जीवन-लीला एउटा नाटक हो भन्ने भनाइ छ, तर यसमा पूर्ण सहमति दिन सङ्कोच लागिरहेछ। झापाको निकै शून्य वातावरणमा बस्दा अतीतका ती रमाइला दिनहरू याद आउँछन् साथीहरूको सम्झना हुन्छ। सपना जस्तो मलाई लाग्दैन, ती वस्ताविकताका रमाइला दिन थिए। बाल्यकाल देखिका साथीहरू एक वर्ष कोही घनिष्ठ मित्र हुन्थे, अर्को वर्ष उनीहरूको स्थानान्तरणले अथवा असफल भएर वा विभिन्न परिस्थितिमा अलगिन्थे। कोही चाँडै सर्कारी जागिरमा लागेर अलगिन्थे, विस्तारै भुलिन्थ्यो अथवा गहिरो छाप भए पनि धमिलिँदै जान्थ्यो। तीस-पैंतीस वर्षको अनुकूल परिस्थितिले साथ रहनपाउने साथी कम हुन्छन्, तर मेरा साथी रामकृष्णसँग म तीस-पैंतीस वर्ष नै नजिक सम्पर्क रहेको अहिले लेखाजोखा गर्दा पाएँ।

वर्माबाट सैनिक सेवाबाट अवकास प्राप्त गरी एउटा खाइलाग्दा राता-पीरा सुबेदार आफ्ना एक बालक छोरा र एक छोरी लिई कालिम्पोङ्गको इच्छे बस्तीमा आई बसोबासो गर्नलागे। यता मेरो परिवार पनि तिनताक चलेको चलनबमोजिम मुगलानतिर लाग्ने एक परिवार थियो र नान्दु काब्रेबाट त्यही इच्छे बस्तीको माथिल्लो गाउँमा मेरा बाले आफ्नो जीवनको समस्त भाग त्यहीं बिताउने गरी बसोबासो गर्नु भएछ। मलाई त्यहाँ कोक्रोमा लगेका'रे। सुबेदार साहबका बालक छोरा थिए-मेरा साथी रामकृष्ण शर्मा। हाम्रो घर अलि उचाइमा रहेकाले र उनको चाहिँ अलि तल रहेकाले बा पराल-बाँस किन्न जाँदा म पनि पछि-पछि लागेर कता-कता सुबेदारनीको सुन्तला खाएजस्तो लाग्छ। सुबेदारको मृत्यु चाँड़ै भएकाले चड्दो उमेरकी सुबेदारनीले धैर्यका साथ बालकहरूको हेरचाह गरेर बसिन्। जग्गाजमिन सुबेदार साहबले किनिदिएकै थिए। यसैले मेरा साथीलाई सानैदेखि सुबेदारको छोरा नभनी सुबेदारनीका छोरा भनेको मलाई याद आउँछ। त्यसरी सानामा त्यस गाउँमा जाँदा हाम्रो देखादेख भयो क्यार, हेराहेर गऱ्यौं क्यार। म मेरा बाको कमिजको फेर समातै त्यहाँ गएको थिएँ भने उनले पनि आमाको फरियाको पछिल्तिरबाट मलाई हेरेको जस्तो लाग्छ।

हामी दुवै दश पुगेर एघार लाग्दादेखि भने राम्ररी सम्पर्कमा आयौं। म देहातको प्राथमिक पाठशालाबाट स्कटल्याण्डका मिशनेरी साहबहरूले सञ्चालन गरेको ख्यातिप्राप्त हाइस्कूलमा तेस्रो श्रेणीमा भर्ना हुन आउँदा साथीसँग त्यहीं भेट भयो। सायद उनी बर्माबाट आएर त्यहीं स्कूलको दोस्रो श्रेणीबाट तेस्रो श्रेणीमा आएका थिए क्यार! साथीको स्वभाव निकै आक्रामक थियो भने म चाहिँ जाइलाग्दिन थिएँ। खेल-ठट्टामै उनी लाप्पा खेल्नाउँथे, तर आइलागेपछि म पनि पुच्छर लुकाएर भाग्दिनथैं, दुवैको निकै कुस्ती







चल्थ्यो। दिउँसोको खाजाखाने छुट्टीमा काठको पटाइ ठोकेको भुइँमा निकै डाङडाङ र डुङडुङ गरी लाप्पा खेल्थ्यौं, अरू सहपाठीहरू तमाशा हेर्थे। रिसारिस नभएकाले सो कुस्ती सबैलाई मन पर्थ्यो। आखिर थाकेपछि धूलो टक्टक्याउँदै टोपी यता र उति खोजेर लाउँथ्यौं, स्याँ-स्याँ हुन्थ्यौं। हाम्रो त्यो श्रेणीका गुरु थिए श्री हेमचन्द्र प्रधान- नेपाली क्रिस्चियन। उनी खूबै राम्रा खेलाड़ी हुनाले उनी फुटबल खेल्दा र अरू खेलकूदमा उत्रिँदा हामी बाहुनकै छोरा भए पनि उनको बुट बोक्ने, स्पाइक बोक्ने र कोट-पतलुङ समाउने काममा सधैं होड़बाजी हुन्थ्यो। म प्राथमिक पाठशालाबाट छात्रवृत्ति पाएर आएको हुनाले हाइस्कूलमा पनि राम्ररी पास गर्न खूब मेहनत गर्थें, तर साथी त्यसो गर्दैनथे। उनी निस्फिक्री थिए। त्यो सालको अन्त्यमा साँढ़े छ फिट अग्ला स्कटिस प्रिन्सिपल परीक्षाफल सुनाउन आए। पुरस्कार पाउने पहिलो र दोस्रो हुनेहरूको नाउँ भनेपछि अनुत्तीर्ण हुनेहरूको नाउँ प्रिन्सिपलले पढ़ेर अरू उत्तीर्ण भएको सूचना भयो। म दोस्रो भएर पुरस्कार पाउने भएँ, तर साथी भने अनुत्तीर्ण हुनेहरूको सूचीमा नाउँ नआउँदा छक्क परेछन्। परीक्षा-फल सुनाएर प्रिन्सिपल साहब निस्के, घण्टी पनि बज्यो। साथीले 'अरे म पनि पास भएँछु 'भन्दै उफ्रँदै खुशीयाली मनाएको मलाई अझ झलझल याद छ।

त्यसपछि श्रेणीहरूमा उनी पनि उत्तीर्ण हुँदै आए। म प्रथम हुँदै आएँ। हामी आठौं श्रेणीमा आएका थियौं। हाम्रा क्लास टिचर हुनुहुन्थ्यो रणधीर सुब्बा। अर्द्धवार्षिक परीक्षाको हामीले लेखेका उत्तरपत्र हामी फिर्ता पाउँथ्यौं। परीक्षा सकिएपछि सम्बन्धित गुरुहरूले उत्तर-पुस्तिका फिर्ता दिए। जम्मा आठसयको पूर्णाङ्कमा मैले ६५० जति पाएको थिएँ। मेरा साथीको ४०० जति मार्क रहेछ। श्री रणधीर सुब्बा क्लासमा आएर फस्ट ता टीकाराम नै होला, (हुन पनि म आठै विषयमा *(सबैमा)* प्रथम भएको थिएँ। त्यसमा जोड़दा पनि प्रथम स्थान नपाउने त कुरै थिएन।) अनि को सेकेन्ड भयो? भनेर सुब्बाज्यूले सोध्नुभयो। साथीले 'म भए सर' भनेर निकै रवाफसाथ उठेर जवाब दिए। तेरो टोटल कति भयो? भन्दा ४०० भन्ने सुनेर सुब्बा गुरुजी एक फन्को आफ्नै ठाउँमा घुमेर यु सिल्ली आस (तँ मूर्ख! गधा!), 'अढाई सय मार्कले हारेर सेकेन्ड भएँ भन्नु तँलाई लाज लागेन?' भन्ने कटुवचन श्रेणीमा सबैले सुने। आर॰ डी॰ सर (श्री रणधीर सुब्बालाई हामी त्यसै भन्थ्यौं)ले बेला-बेलामा हामीलाई 'सिल्ली आस!' भनेर झपारेको त कुनै नयाँ कुरो थिएन, तर त्यो दिनको साथी रामकृष्णलाई प्रयोग गरेको 'सिल्ली आस' सहितको कटुवचन उनको प्रतिभाशाली भावी जीवनको साँचो भयो जस्तो मलाई लागेको छ।

नवौं श्रेणीदेखि साथी जुर्मुरिएर पढ्न थाले। मेरो घर स्कूलदेखि ४ माइल थियो, उनको ३ माइल, तर बाटो चाहिँ माथिल्लो बाटो र तल्लो बाटो पर्थ्यो। म दिनैपिच्छे आउँदा र जाँदा ८ माइल हिंड्थें, भने उनी ६ माइल- पछि उनले साइकल पनि पाए, तर बाटो उँधो-उँभो हुँदा धेरै घचेट्नु पनि पर्थ्यो। त्यति धाएर पनि हामी फुटबल खेल्थ्यौं, खेलकूदमा बराबर भाग लिन्थ्यौं। संयोगवश, उता साथी आर॰ डि॰ सरको कटुवचनले इखिएको गोमन सर्प झैं मेहनत गर्न थालेका थिए। नवौं श्रेणीको अर्द्धवार्षिक परीक्षाको दुवै पेपर हिसाबको दिन मलाई ज्वरो आयो, निकै आलसतालस अवस्थामै परीक्षा दिएँ, तर अङ्क ज्यादै







कम आयो। साथीले प्रथम स्थान लिए- हाम्रो स्पर्धा अब उग्र भयो। त्यस स्कूलको हलमा ***अर्ल अफ लिटन डक्स*** भन्ने पुरस्कार जिलेहरूको नाउँ धेरै वर्षअघिदेखि सालियाना ताम्रपात्रमा लेखिन्थ्यो। हामी त्यो ताम्रपात्र हेर्दै १९३९ को मेट्रिकमा जाने अन्तिम परीक्षापछि त्यहाँ आफ्नो नाउँ अङ्कित गराउने आकाङ्क्षा थियो। आठौं श्रेणीसम्म त म एक्लै थिएँ, तर नवौं श्रेणीदेखि साथीले आँखा गाड़े। **डक्स** उनैले लिए, साथै खेलको सर्वश्रेष्ठ खेलाड़ीको च्याम्पियनसिप पनि। म बल गर्थें, तरै पनि आफ्नो अङ्क १०/२० पछि पर्थ्यो। कलकत्ता विश्वविद्यालयको संशोधित पाठ्यक्रममा पहिलोपटक ६०% प्रथम श्रेणी तोकिएको परीक्षामा हामी १९४० मा बस्यौं। समस्त दार्जीलिङ जिल्लामा ४ जना प्रथम श्रेणीमा आउनेमध्ये, हामी दुवै थियौं, तर त्यहाँ पनि उनी डिस्ट्रिक्ट फस्ट भए भने म सेकेन्ड। त्यहाँ पनि पछि परें, तर दुवैले डिस्ट्रिक्ट छात्रवृत्ति पाएर कलेजमा आइ॰ ए॰ मा भर्ना भयौं। अधिकांश प्राध्यापक स्कटलेन्डका साहब र मिस साहबहरू थिए। नेपालीमा श्री रणधीर सुब्बा र लजिकमा श्री कृष्णदास प्रधान बाहेक अरू सबै गोरा-गोरी नै थिए। हामीले मेट्रिक र आइ॰ ए॰ पढ़दा **शारदा** काठमाडौंबाट निस्कन्थ्यो।त्यतिञ्जेलसम्म प्रकाशित भएका सम्पूर्ण नेपाली पुस्तकहरू हामी दुवैले किनेका थियौं। प्रकाशन-संख्या कम हुनाले हामी नयाँ प्रकाशन तुरन्तै किन्थ्यौं। बालकृष्णका नाटकहरू निस्किरहेका थिए, 'चम्पाकाजी', 'रूपमती', 'नवरत्न', लेखनाथको 'लक्ष्मीपूजा', रुपनारायणको '**भ्रमर**' लगायत सबै पुस्तक र **शारदा**का प्रत्येक अङ्क हामी बड़ो प्रेमसाथ राख्थ्यौं। दोस्रो विश्वयुद्ध चम्किरहेको थियो। हामीले आइ॰ ए॰ परीक्षा '४२-मा दियौं। समस्त विश्वविद्यालय त्यसबेलाको संयुक्त बङ्गाल र आज छ राज्यमा बाँड़िएको त्यसबेलाको संयुक्त आसाम, त्रिपुरा, मणिपुरको एकमात्र कलकत्ता विश्वविद्यालयमा साथीले ७६% प्रतिशत पाएर सौहौं स्थान पाए, मैले ७१% पाएर ८९ औं स्थान। दुवैजना प्रथम एकसय स्थानभित्र आए पनि म फेरि ५% पछि नै रहें।

जापानीहरूले कलकत्तामा बम्बार्ड गर्न थालेका थिए। आर्थिक स्थिति राम्रो भएकोले र एउटी आमालाई जबर्जस्त सम्झाई-बुझाई साथी कलकत्ताको **स्कटिस चर्च कलेज**मा पढ्न गए। मैले पाइनँ। आफैं पढेको स्कूलमा शिक्षक भई प्राइभेट बि॰ ए॰ परीक्षा दिनेबाहेक मेरो अरू केही उपाय थिएन। साथीले केही पुस्तकहरू किनेर पठाइदिए। साथीले ४४ सालमा बि॰ ए॰ अनर्स पास गरे र कानुन (बि॰ एल॰)र एम॰ ए॰-को पढ़ाए शुरु गरे। यसैबीचमा अखिल भारतीय गोर्खालीगको स्थापना भयो। केही समयसम्म श्री रणधीर सुब्बा पार्टीको मुखपत्र **गोर्खा**को सम्पादक रहनुभयो तर पछि सम्पादन, सञ्चालनको सम्पूर्ण भार मलाई सुम्पियो। कलकत्तामा छापिउञ्जेल **गोर्खा**को प्रुफ हेरिदिने काम साथीले गरिदिए, तर नोवाखालीबाट शुरु भएको वीभत्स हिन्दु-मुस्लिम दङ्गामा हाम्रो सम्पूर्ण ब्लक र प्रकाशकीय सामग्री ध्वस्त भएकोले **गोर्खा** कालिम्पोङ्गमा छापिनेभयो र साथी रामकृष्ण पनि आफ्नो बि॰ एल॰ को अन्तिम चरण समाप्त गर्न गौहट्टी कलेजमा सरे, तर गोर्खालाई सामयिक लेख बराबर पठाइ रहे। बि॰ एल॰ को परीक्षामा साथीले कलकत्ता विश्वविद्यालयमा प्रथम स्थान प्राप्त गरी स्वर्णपदक लिए औं **गोर्खा**-को नव-वर्षको विशेषाङ्कमा उनको लगायत श्री लैनसिंह बाङ्देल, डा॰ मणिकुमार छेत्रीको







सचित्र जीवनी विद्यामा वीर गोर्खाली-को शीर्षकमा प्रकाशित गरियो। एम° ए°-को पढाइ भने साथीले छाड़ेको छाड्यै गरे।

साथीले स्थानीय अदालतमा वकालती शुरु गरे। मलाई कुमुदिनी होम्सको सम्पूर्ण भारसहित प्रधानाध्यापकको पद सम्हाल्न सामाजिक, राजनैतिक आग्रह भयो। साथीबाट त्यसमा निरन्तर सहयोग पाइरहें। पछि साथीका छोरा-छोरी पनि यसै विद्यालयमा आएकाले अभिभावकको रूपमा पनि उनी विद्याश्रमसँग सम्बन्धित भए। हाम्रो सम्पर्क बढी रह्यो, दुवै गोर्खालीगका अनुयायीको रूपमा पनि चुनाउ अभियान र प्रसार-प्रचारमा सधैं साथ रहन्थ्यौं।

१९६१-मा मलाई समस्त भारतका पाँचजना प्रधानाध्यापकहरूलाई छानेर ब्रिटिस काउन्सिलको तत्त्वावधानमा बेलायत गएर शिक्षा-प्रणाली अध्ययन गर्ने मौका मिल्यो। नेपालबाट विदेश जानु कुनै ठूलो कुरो हुँदैन, तर भारतमा बसेका नेपालीहरूका लागि भने यो अति गौरवको कुरो भयो। छोटो समयमा हिंड्नु पर्दा साथीबाट पासपोर्ट लिन र अन्य काममा खुब मदत मिल्यो र यही अवसरमा उनी पनि न्याय सेवामा जाने वातावरण आयो। म बेलायतबाट फर्कंदा उनी न्याय सेवामा नियुक्त भइसकेका रहेछन्। सरकारी जागिरमा प्रवेश गरेपछि हामी राजनीतिक मञ्चबाट अलग भयौं, तर कोठे सरसल्लाह पाउन कमी भएन। डिस्ट्रिक्ट शेसन जज, आदि पद सम्हाल्दै उनले कलकत्ताको हाइकोर्टको न्यायधीश पद सम्हाले र यता म चाहिं स्वदेशको माया गरेर झापामा बसाइँ सरें। हाम्रो ३५ वर्षको निकट सम्पर्क तोड़ियो।

सात-आठ वर्ष अघिको कुरा होला, साथी आफ्नी श्रीमती र छोरीहरू लिएर नेपाल-भ्रमणमा आएका रहेछन्। आज झापा आउने रे, भनेर स्थानीय प्रशासनलाई पनि आतिथ्य सेवा गर्नु भन्ने आदेश रहेछ। बालमन्दिरमा त्यसै दिन वृक्षारोपणको कार्यक्रम रहेछ। साथी हाम्रो घरमा एक रात बस्ने भए।अञ्चलाधीश श्री लीलाराज विष्टले एउटा रूख रोप्न आग्रह गर्नुभयो। साथीले तुरन्तै जवाब दिए- तपाईंहरूको यस्तो औपचारिक देखावटमा मलाई नमुछ्नुहोस्-भारतमा यही विडम्बना छ- यहाँ पनि यही दोहोराउनुहुन्छ? म भोलि सुकेर मर्ने रुख रोप्दिनँ। अनि मलाई ४०/ ४५ वर्ष अघिदेखिको मेरो साथीको स्वभाव याद आयो- मेरो खरो साथी रामकृष्ण।

आज साथीले भारतको न्याय-सेवामा पसेर एकमात्र नेपाली न्यायधीश रहेको गौरव प्राप्त गरी अवकास लिएको छ। सुबेदारनीको घर अचेल जजसाहबको घरमा परिणत भएको छ अनि डेढ़ करोड़ नेपाली किसानको हूलमा अल्मलिएर म अतीतका ती मीठा अनुभव याद गरिरहेछु।









# डॉ.हरिप्रसाद छेत्री: एक अध्याय

राज के॰ श्रेष्ठ

१२ अगस्त सन् १९४३-को दिन रिनाकमा जन्मिनु भएका डॉ॰ हरिप्रसाद छेत्रीको बाल्यकालीन शिक्षा रिनाकमै सकियो। त्यसबेला प्राथमिक पाठशालामा पढ्दै गर्दा स्कूल सकेर घर आएपछि उहाँका पिताले, बाबु! दिनभरी आफ्नो निम्ति पढ्यौ अब छिमेकीहरूलाई बेसी नभए पनि नामसम्म लेख्न सिकाऊ। यसरी बाल्यकालमा छिमेकीलाई पढाउने कार्य उनी रिनाक रहुञ्जेल जारी रह्यो।

रिनाक को प्राथमिक पाठशालाको पढ़ाइ सकिएपछि तिनताक उच्च-शिक्षाको प्रबन्ध रिनाकमा नभएकोले कुमुदिनी विद्याश्रम कालिम्पोङ्गमा उहाँको अध्ययन शुरु भयो। त्यसपश्चात् कल्याणी विश्वविद्यालयबाट एग्रीकल्चरमा बी॰ एस्सी॰ (सम्मान), मेरठ विश्वविद्यालयबाट समाज-शास्त्रमा एम॰ ए॰ र त्यसपछि उत्तर बङ्ग विश्वविद्यालयबाट एल॰ एल॰ बी॰-को डिग्री प्राप्त गर्नुभयो। यू॰ के॰-को बर्मिङ्हाम विश्वविद्यालयमा अध्ययन गरी तथा स्काउट्स, एण्ड गाइड्सबाट विभिन्न राष्ट्रहरूको भ्रमण गरी पर्याप्त अनुभवहरू बटुली निजी फाइभवेज बिल्डिङ्गलाई लाभान्वयनको निम्ति किराइ र दोकानमा प्रयोग नगरी शैक्षिक संस्थानको रूपमा प्रयोग गर्नु ट्युटोरियल क्लास स्थापना गर्नुभयो।



हालै २००७ सालमा उहाँको सबैभन्दा ठूलो उपलब्धि उहाँकै निजी जीवन र समाजकै निम्ति पनि गरिमामय कार्य गरेर समाजलाई नै चकित पार्ने गरी ६४ वर्षको उमेरमा पनि उत्तर बङ्ग विश्वविद्यालयबाट समाज-शास्त्रमा पञ्चायतीराज विषयमा शोध कार्य गरी पी॰ एच॰ डी॰ डिग्री हासिल गरेर एउटा अद्भूत उदाहरण बनिदिनुभएको छ। उहाँले युवावर्गलाई Catch me if you can अर्थात् सक्छौ भने मलाई भेट, भनी प्रोत्साहन र चुनौतीको सन्देश दिनुभएको छ। उहाँको यस्तो उत्साहवर्धक कार्य हाम्रो समाजको निम्ति प्रेरणादायक कार्य हो।

१९९० सालमा फार्मेसी डिप्लोमा(D. Pharm) तथा कतिपय कारणवश आठौं श्रेणीदेखि अघि पढ्न अवसर नपाएकाहरूलाई (National Open School)ओपन स्कूलको







दशौं र बाहौ श्रेणीसम्म पास गर्न चाँजो मिलाई युवाहरूको शैक्षिक योग्यतालाई अघि बढ़ाएर लाने प्रबन्ध मिलाउन उहाँ सक्षम हुनुभयो। उहाँको शैक्षिक संस्थानले वर्षेनी गान्तोक र जोरथाङबाट दशौं श्रेणीमा प्रायः दुइ सय र बाहौं श्रेणीमा प्रायः डेढ़ सयभन्दा बेसी युवा-युवतीहरूलाई उत्तीर्ण गराउने श्रेय लिंदछ। साथै कलेज अफ लाइब्रेरी साइन्स एण्ड एज्युकेशन (College of Library Science and Education) को पनि स्थापना गरी सञ्चालन भइरहेछ।

सन् १९९४ सालमा उहाँले आफ्नै पिताको नाउँमा डम्बर सिंह कलेज स्थापना गर्नुभयो। यहाँबाट पनि धेरैजना ग्र्याजुएट भएर शिक्षित समाजको निर्माण गर्नमा ठूलो सहयोग पुगिरहेको छ।

पछि फार्मेसीमा स्नातक स्तरको ब्याचलर-इन- फार्मेसी(B.Pharm) १९९७ मा अनि २००५ सालमा फार्मेसी विषयकै स्नातकोत्तर मास्टर-इन-फार्मेसी (M.Pharm) सफलतापूर्वक परिचालन भइरहेछ। हालैमा यही विषयमा Ph.D.गर्ने विद्यार्थीहरू १७ जना छन्। पूर्वाञ्चलमा यो हिमालयन फार्मेसी इन्स्टिच्युट एउटै मात्र यस्तो शैक्षिक संस्थान हो, जो निजी आर्थिक व्यवस्थापनमा(Self Financing) सञ्चालित भइरहेछ।

यसैबीच २००३ मा हर्कमाया कलेज अफ एज्युकेशन(Harkamaya College of Education) स्थापना गरी बी॰ एड॰ (B.Ed.)र एम॰ एड॰ (M.Ed.) को पनि पढ़ाइ सुचारु रूपले भइरहेछ। यसरी पिता को पनि पढ़ाइ... डम्बरसिंहको नाउँमा डम्बरसिंह कलेज र माता हर्कमायाको नाउँमा हर्कमाया कलेज अफ् एज्युकेशनको स्थापना गरी उहाँले आफ्ना माता-पिताप्रति श्रद्धा र भक्तिस्वरूप देवालयको रूपमा शैक्षिक संस्थाहरू सफलतापूर्वक सञ्चालन गरिरहनु भएको छ भने अरूका छोरा-छोरीहरूका निम्ति पनि आफ्ना माता-पिताप्रति गरिनपर्ने कर्त्तव्यबारे ज्वलन्त उदाहरण भइरहेछ।

हालैमा २००७ एन॰ आइ॰ आइ॰ टी॰ को कम्प्यूटर प्रशिक्षण केन्द्रको पनि स्थापना गरी १२ क्लास आर्टस् लिएर पास गर्ने विद्यार्थीहरूलाई अन्योलमा नपरी बी॰ एस्सी॰ आइ॰ टी॰(B.Sc.I.T) को डिग्री दिइने प्रबन्ध गरिएको छ।

शिक्षा समाजको निम्ति ज्ञान मात्र होइन तर हो चेतना र विकास पनि। शिक्षाबिनाको समाज वन-जङ्गल जस्तै हो जहाँ मानिसहरू पशुसरह बन्दछन्। शिक्षा राष्ट्रको मेरुदण्ड हो। यो बलियो भए मात्र राष्ट्र दह्रिलो बन्दछ। यस्ता दह्रिला शैक्षिक संस्थानहरूको स्थापना गरी शिक्षित समाजको निर्माण गर्नुहुने डा॰ एच॰ पी॰ छेत्री शिक्षाको क्षेत्रमा अग्रणी दिग्दर्शक हुनुहुन्छ भन्ने कुरामा कुनै दुइ मत हुनै सक्दैन।

उहाँको काम गर्ने तरिका पनि अद्भुत छ। कम्ती सुतेर अर्थात् सुताइको धेरजस्तो भाग समेत काममै प्रयोग गरेर अनि कम्ती खाएर धेरै काम गरी डम्म अघाउने उहाँको प्रवृत्तिका प्रतिफलहरू हुन् ,उहाँका यी सब कार्य गराइहरू, सफलताका कारणहरू। निरन्तर कर्मशील व्यक्तिहरू नै जीवनमा सफल हुन्छन् त्यस्तै सफल व्यक्तिको उदाहरण हुनुहुन्छ डा॰छेत्री।

सिक्किम सरकारमा कार्यरत् छँदादेखि नै शिक्षाको क्षेत्रमा आफूलाई संलग्न गराएर काम गर्दै आउनुभएका डा॰ छेत्रीले यस क्षेत्रमा ३० वर्ष बिताइसक्नु भएको छ। सरकारमा छँदा निर्देशकको पदसम्म पुगी अवकाश प्राप्त गरेपछि हाल पूर्णरूपले यसै संस्थानप्रति पूर्णरूपले समर्पित भई समाज र राष्ट्रको सेवा







